# सफलताको कथा

प्रकाशक: नेपाल अपाङ्ग महिला संघ

कालोपुल काठमाडौं

फोन: ४४३५१३१

ईमेल: ndwa_kath@yahoo.com;

ndwa.2009@gmail.com

संस्करण: प्रथम



डिजाइन तथा लेआउट : आकार, ९८४१२९०१२२

मुद्रण: खड्ग अफसेट प्रेस

# प्रकाशकीय



नेपाल अपाङ्ग महिला संघ अपाङ्गता भएका महिलाका हक–अधिकार सुनिश्चत गर्ने उद्देश्यले २०५४ सालमा स्थापना भएको अपाङ्गता भएका महिलाहरूकै नेतृत्वमा अगाडि बढिरहेको राष्ट्रियस्तरको स्वावलम्बन संस्था हो। यसले अपाङ्गता भएका महिलाका मानव अधिकार, सामाजिक, आर्थिक, राजनीतक न्यायमा पहुँच तथा समानताका पक्षमा वकालत र पैरवी गर्दै आइरहेको छ। यस संघले अपाङ्‌गता भएका महिलाको सशक्तीकरण, पुनःस्थापना र मानव अधिकार सुनिश्चितताका लागि विभिन्न कार्यक्रम अगाडि बढाइरहेको छ। अपाङ्‌गता भएका महिलाको सार्वजनिक जीवनमा सहभागिता, राजनीतिक, आर्थिक, सामाजिक सशक्तीकरण र राज्यका सबै तहमा समान प्रतिनिधित्वका लागि आवाज बुलन्द गर्दै स्थानीयदेखि राष्ट्रियस्तरसम्म विभिन्न कार्यक्रम सञ्चालन गरिरहेको छ। फलस्वरूप हालसम्म काठमाडौंमा अपाङ्‌गता भएका महिलालाई पुर्नस्थापना गर्ने उद्देश्यले एक वटा अपाङ्‌गता भएका महिला पुर्नस्थापना गृह सञ्चालनमा आईरहेको, पूर्वाञ्चल क्षेत्रको मोरंग र सुदूर पश्चिमाञ्चल क्षेत्रको कञ्चनपुरमा दुई वटा क्षेत्रीय कार्यलय स्थापना, १७ वटा जिल्लामा अपाङ्‌गता भएका महिलाको जिल्ला सञ्जाल, अपाङ्‌गता भएका महिलालाई रोजगार दिने उद्देश्यले काठमाडौमा एउटा एक्सेस ईन फुडल्याण्ड नामक क्याफेटेरिया, ८ वटा विधिवत रूपमा जिल्लामा दर्ता भएका स्वावलम्बन संस्था, गाविसस्तरीय ६७ वटा स्वावलम्बन समूह गठन गरी संस्थागत विकासमा टेवा पुर्‍याइरहेको छ।

नेपालमा हालसम्म हेर्दा अपाङ्‌गता भित्र पनि अपाङ्‌गता भएका महिलाप्रतिको दृष्टिकोण नकारात्मक नै छ। उनीहरूले केही गर्न सक्दैनन्, उनीहरूलाई लगानी गर्नुभनेको लगानी खेर फाल्नुसरह हो र उनीहरूले राज्यलाई योगदान दिन सक्दैनन्, आफ्नो सम्पतिको संरक्षण गर्न सक्दैनन् भनी सम्पति नदिने, दिए पनि संरक्षकको नाममा दिने गरेको पाइन्छ। यसरी कल्याणकारी सोचबाट प्रेरित भई उनीहरूलाई

राष्ट्रका अनुत्पादक र निस्क्रिय नागरिकको रूपमा गणना गर्ने गरिन्छ। अझै पनि अपाङ्गता भएका महिलालाई परिवार, समाज र राज्यले बोझका रूपमा लिने गरेको पाइन्छ। धेरैजसो परिवारले उनीहरूलाई घरबाट टाढा कुनै संस्थालाई जिम्मा लगाई सधैंका लागि पठाउने चलन व्याप्त छ। उनीहरूको शिक्षा, स्वास्थ्य, रोजगारी, सामाजिक सुरक्षा, पुनःस्थापना, यौनिकता र प्रजनन् अधिकार एवं सम्पतिमाथिको अधिकारको कुरा त परै छाडौं, उनीहरूले बाँच्नका लागि चाहिने आधारभूत कुराहरू : गाँस, बाँस र कपासको अधिकारबाट समेत बञ्चित हुनु परिरहेको अवस्था छ।

मानव अधिकारका सन्धि, अभिसन्धिहरूमध्ये ८ वटा विभिन्न महासन्धिलाई नेपालले पनि अनुमोदन गरिसकेको छ। तीमध्ये अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि (सीआरपीडी, २००६ को धारा ६ ले अपाङ्गता भएका महिलाका अधिकारहरू स्पष्टरूपमा उल्लेख गरेको छ। एकातिर यी महासन्धि अनुमोदन भइसकेपछि पक्षराष्ट्रले आफ्ना देशका कानुनसरह लागू गर्नुपर्ने हो भने अर्कोतिर तिनै महासन्धिका आधारमा देशका कानुन, नीति, नियम घरेलुकरण हुनुपर्ने हो तर ५ वर्ष बितिसक्दा पनि विद्यमान कानुनहरू संशोधन नहुनु देशको लागि लज्जास्पद कुरा हो।

परिवार, समाज र सरोकारवाला निकायका जिम्मेवार प्रतिनिधिहरूले पनि यस्ता अपाङ्गता भएका महिलाको अवस्था, उनीहरूले भोगिरहेका समस्या, सफलताका कथा साथै उनीहरूका अधिकार र विद्यमान नीति, नियम र कानुनका बारेमा जानकारी लिई त्यसको कार्यान्वयन गर्दै अपाङ्गता लाई केन्द्रबिन्दुमा राखी विशेष किसिमका नीति, नियम र कार्ययोजना बनायो भने मात्र सबै सामान्य नागरिक, अपाङ्गता भएका व्यक्ति, अपाङ्गता भएका महिला र बाल बालिकाले आफ्ना हक हित र अधिकार उपभोग गर्न पाउने छन्। तसर्थ, यस संघले सदैव वकालत, पैरवी, जनचेतना र क्षमता विकासका विविध कार्य गरिरहने छ। यसै सिलसिलामा यस संघले अपाङ्गता भएका महिलाले भोग्नु परिरहेका समस्या, तथ्यगत अवस्था र जीवनका सफलताका बारेमा बुझ्ने र बुझाउने मुख्य लक्ष्यका साथ यो पुस्तिका तयार पारिएको छ। राज्यलाई अपाङ्गता भएका महिलाका अधिकार प्राप्तिका लागि घचघच्याउन, परिवार, समाज र राज्यको उनीहरूप्रतिका गलत धारणा अन्त्य गर्न, अपाङ्गता भएका महिलाहरूको क्षमता विकास गर्न र उनीलाई संगठित गर्दै आफ्ना हक, हित र अधिकारका बारेमा आवाज उठाउन सक्ने बनाउने कार्यमा यस पुस्तकले सहयोग गर्नेछ भन्ने विश्वास छ। यो गर्नु आजको आवश्यता पनि हो।

अन्तर्राष्ट्रिय, राष्ट्रिय र स्थानीयस्तरमा अपाङ्गता भएका महिलाका समस्या र अवस्था विश्लेषण गर्न सामाजिक कार्यकर्ता तथा अभियानकर्ताहरूलाई समुदायमा सञ्चालन हुने तालिम, गोष्ठी, छलफल, अधिवाचन, अध्ययन, योजना तर्जुमाका साथै वकालतका कार्यक्रममा स्रोत सामग्रीका रूपमा यो पुस्तिका तपाईहरुको सामु पस्किने जमर्को गरेका छौ र पक्कै पनि यो सामग्री सवैको लागि उपयोगी हुने हाम्रो ठहर छ।

अन्त्यमा, यो पुस्तिका तयार गर्न प्रत्यक्ष वा अप्रत्यक्षरूपमा सहयोग गर्नुहुने सम्पूर्ण व्यक्ति तथा संघ संस्थालाई हृदयदेखि नै धन्यवाद दिन चाहान्छु।

**निर्मला धिताल**
महासचिव
नेपाल अपाङ्ग महिला संघ
कालोपुल, काठमाडौं

# धन्यवाद



नेपाल अपाङ्ग महिला संघ र CBM को साझेदारीमा "अपाङ्गता भएका महिलाको सशक्तीकरण" परियोजना अन्तर्गत सन् २०१२ देखि परियोजनाको मुख्य कार्यक्षेत्र मोरङ्ग जिल्लाका ९, बाँके जिल्लाका ३ र कञ्चनपुरका ४ वटा गा.वि.स.का साथै केन्द्रीयस्तरमा वकालत तथा पैरवीका कार्यक्रम सञ्चालन हुँदै आएका छन्।

यस परियोजनामार्फत अपाङ्गता भएका महिलाहरूको सशक्तीकरणका लागि जीविकोपार्जन, शैक्षिक कार्यक्रम, नेतृत्व विकासका साथै अपाङ्गता र समावेशी विकाससम्बन्धी कार्यक्रम सञ्चालन भइरहेका छन्। यी कार्यक्रमबाट कार्यक्षेत्रमा रहेका अपाङ्गता भएका महिला लाभान्वित हुनुभएको छ।

यस पुस्तिकामा मुख्य गरेर यो परियोजना शुरू हुनभन्दा पहिले र परियोजना सञ्चालन भइरहेको समयलाई विश्लेषण गर्दै लाभान्वित समूहबाट उनीहरूको अवस्था अवलोकन गरी प्रतिनिधिमूलक सफल कथाहरू समावेश गरेर प्रकाशनमा ल्याएका छौं। प्रस्तुत सफलताका सथाहरूबाट अपाङ्गता भएका महिलाहरूका अवसर र चुनौतीका बारेमा जानकारी प्राप्त हुनेछ।

पुस्तक प्रकाशनको यस प्रयत्नमा पहिलो धन्यवाद अपाङ्गता भएका महिला, जसले आफ्ना कथा प्रकाशनका लागि संघलाई अनुमति प्रदान गर्नुभयो। त्यसैगरी यो पुस्तक तयार गर्ने क्रममा आफ्नो महत्वपूर्ण भूमिका निर्वाह गर्ने सामुदायिक परिचालिकाहरू नन्दकली राना, मीना आचार्य, विनिता शर्मा, क्षेत्रीय संयोजकहरू भीमा खतिवडा अनि अनिता ढुङ्गाना, केन्द्रीय कार्यसमिति र साझेदार निकाय CBM प्रति हार्दिक कृतज्ञता जाहेर गर्दछौं। भाषा सम्पादन तथा शुद्धाशुद्धीमा सहयोग गर्नुभएकोमा धातृप्रसाद सुवेदी र डिजाइनर केशवराज खनालप्रति आभारी छौं।

मीना पौडेल<br>
कार्यक्रम संयोजक<br>
नेपाल अपाङ्ग महिला संघ



# विषय-सूची







# सिपले सुधारेको जीवन

लोककुमारी रोक्का



हिड्ने समय भएपछिमात्र लोककुमारी रोकामा अपाङ्गता भएको भन्ने थाहा भयो। त्यो भनेको झण्डै ३/४ वर्षको उमेर हो। उहाँ छ महिनाकी हुँदा ज्यादै ज्वरो आएको थियो। त्यही ज्वरोका कारण उहाँका हातखुट्टा चलाउने क्रममा पहिलेको भन्दा फरक भएको थियो।

आज पनि प्रायः उहाँको मनले आफैँसँग प्रश्न गर्छ– छोरी ज्यादै बिरामी भएर पहिलेजस्तो हातगोडा चलाउने नगर्दा पनि अभिभावकले किन ध्यान नदिएका होलान् ? अस्पताल पुऱ्याएर राम्ररी उपचार किन नगराएका होलान् ? के आफ्नो ठाउँमा कुनै छोरालाई त्यस्तो भएको भए पनि त्यही व्यवहार हुन्थ्यो र ?

सामान्य परिवारमा २०३६ वैशाखमा जन्मिएकी लोककुमारीलाई अत्यधिक ज्वरो आयो। त्यो ज्वरो पोलियोका कारणले भएको रहेछ। तर उहाँको परिवारलाई यो कुरा थाहा भएन। उहाँको मनले 'परिवारको र समाजको छोरीप्रतिको नकारात्मक

धारणकै कारण आफूलाई अस्पताल नलगिएको हो कि ?' भन्ने शंकालु प्रश्न गर्छ।

उहाँको अपाङ्गताका कारण नै समाजबाट उहाँका साथै उहाँको परिवारले पनि असामान्य व्यवहारहरू सहनु पर्‍यो। उहाँ भन्नुहुन्छ– आफूप्रतिको समाजको दृष्टिकोण नकारात्मक थियो। यसले के गर्न सक्छे र ? आमा–बाबु हुँदासम्म हो, उनीहरूको शेषपछि यसलाई कसले हेर्लान् ?

घरायसी र शारीरिक अवस्था जतिसुकै प्रतिकूल रहे पनि उहाँले पढाइलाई निरन्तरता दिनुभयो। २०५६ सालमा प्रवेशिका (एस.एल.सी.) दिनुभयो। परीक्षा उत्तीर्ण हुन नसक्दा निकै नै निराश हुनभयो। त्यसैगरी २०६३ सालमा विवाह गर्नुभयो। समाजले त्यहाँ पनि कुराकाट्न छाडेन र भन्यो– यस्ताले पनि किन बिहे गर्नुपरेको होला ?

व्यापारिक मेलाहरूमा समेत आफ्नो सिप प्रदर्शन गर्नुहुन्छ। यी गतिविधिले गर्दा आर्थिकरूपमा परिवर्तन हुँदै आएको छ। हाल आफ्नो दैनिक खर्च कटाएर दुई हजार रूपियाँसम्म मासिक बचत गरिरहेको जानकारी उहाँले दिनुभएको छ।

उहाँका साथमा ७ वर्षका छोरा हुनुहुन्छ। विभिन्न संघ–संस्थामा आवद्ध भएर काम गरे पनि उहाँको रोजगारी भने थिएन। पढाइ र अपाङ्गताले गर्दा नै रोजगारी पाउन कठिन भएको थियो। त्यसपछि उहाँले पढाईलाई समेत निरन्तरता दिने निर्णय गर्नुभयो। २०६७ सालमा खुला शिक्षा अन्तर्गत एस.एल.सी परीक्षा दोस्रो श्रेणीमा उत्तीर्ण गर्नुभयो।

लोककुमारीले त्यतिबेलाको अवस्था यसरी सुनाउनुभयो– श्रीमान्‌को पनि खासै राम्रो रोजगारी थिएन। घर चलाउन धौ धौ परिरहेको थियो। छोरालाई राम्रो स्कुलमा पढाउने इच्छा हुँदाहुँदै पनि पढाउन नपाउँदा निराश थिएँ। आफ्नो पनि रोजगारी थिएन। कुनै पनि संघ संस्थाले हत्तपत्त अपाङ्गता भएका महिलालाई सहभागी नगराउने र अवसर नदिने गरेको मेरो अनुभव छ।

"विक्रम संवत २०६६ सालमा नेपाल अपाङ्ग महिला संघ का बारेमा थाहा पाएँ। यसले अपाङ्गता भएका महिलाका लागि काम गर्दो रहेछ। यस संस्थाका प्रतिनिधिले बाँके जिल्लामा अपाङ्गता भएका महिलाको समूह निर्माण गर्दा मैले सदस्य हुने मौका पाएँ। समूहमा आवद्ध भएपछि समूह सञ्चालन, वचत तथा ऋण, नेतृत्व विकास, कानुनी सचेतना आदि विषयमा तालिम प्राप्त गरेँ।"

चार महिने खेलौना (डल) तथा कुशन बनाउने तालिम लिएपछि आफ्नो जीवनमा परिवर्तन आएको निष्कर्ष उहाँको छ। उहाँ भन्नुहुन्छ– जीवनले नै नयाँ मोड लियो। परिवार र समाजको दृष्टिकोणमा समेत परिवर्तन पाउँन थालेँ।

लोककुमारी यतिबेला प्रशिक्षक भएर तालिम दिने गर्नुहुन्छ। व्यापारिक मेलाहरूमा समेत आफ्नो सिप प्रदर्शन गर्नुहुन्छ। यी गतिविधिले गर्दा आर्थिकरूपमा परिवर्तन हुँदै आएको छ। हाल आफ्नो दैनिक खर्च कटाएर दुई हजार रूपियाँसम्म मासिक बचत गरिरहेको जानकारी उहाँले दिनुभएको छ।

उहाँले छोरालाई राम्रो स्कुलमा पढाउनुभएको छ। विभिन्न संघ–संस्थाका साथै अरू समूहमा पनि आवद्ध भएको, वचत गर्ने गरेको र कार्यक्रममा सहभागी हुने गरेको उहाँ बताउनुहुन्छ। ◆

# सिपले दिलायो सम्मान

देउकुमारी थारु




मेरो नाम देउकुमारी थारू हो। मेरो जन्म २०३७ वैशाख १८ गते बाँके जिल्लाको रझेना गा.वि.स. मा भएको हो। एक वर्षको हुँदा निकै ज्वरो आयो। लामो समय हुँदा पनि घर परिवारले वास्ता गरेन। मलाई पोलियोको थोपा पनि खुवाइएन छ। मेरा दुवै गोडा सुकेर कमजोर भए।

दुवै गोडा कमजोर भएका कारण हात र गोडा टेकेर आफ्नो दैनिक क्रियाकलाप गर्थें। पढ्ने इच्छा र रहर हुँदाहुँदै पनि शारीरिक अवस्थाका कारण विद्यालय जान सकिन। दाजु-भाइ, दिदी-बहिनी सबै विद्यालय जाँदा आफूलाई पनि जान मन लाग्थ्यो। बोकेर स्कुल पुर्‍याइदिने कोही हुँदैनथ्यो।

सबै जना स्कुल जाँदा हेरेर बस्न वाध्य हुन्थें। दिनभरि घरै बस्ने, खाना बनाउने, घरको सरसफाई गर्ने, वस्तुभाउका लागि घाँस काट्ने, दाजु-भाइ र तीन दिदी-बहिनीलाई खाजा बनाएर दिने जस्ता काम गर्थें। घर तथा समाजका सबैले बेवास्ता गर्थे। पढ्ने

इच्छा भएकाले आफ्ना दाजु-भाई, दिदी-बहिनीका किताब र कपि हेरेर अक्षर बनाउने, लेख्ने अनि पढ्ने प्रयास गर्थें। त्यसैका कारण अहिले आफ्नो नाम लेख्न र सामान्य अक्षरहरू पढ्न सक्छु।

त्यसै गाउँका दाजुका साथी पतवारी थारूसँग २०५६ साल वैशाखमा मेरो विवाह भयो। पतवारी पहिले नै आफ्ना आमाबुवासँग छुट्टिएर नजिकै घर बनाएर बस्नुभएको थियो। त साङ्ग भएर यस्ती अपाङ्गता भएकीसँग किन बिहे गरिस्, जसले केही काम गर्न सक्दिन भनेर मेरा श्रीमानलाई निकै कराए। धेरै वर्षसम्म मेरा ससुराले उहाँसँग बोलचालसमेत गर्नुभएन।

अहिले मेरा १३, ११ वर्षका २ छोरी र ९ वर्षका छोरा छन्। सुत्केरी हुँदा सहयोग गर्ने कोही पनि थिएनन्। जसरी तसरी छोरा छोरीको हेरविचार गर्दै आएकी छु। हाम्रो एक कट्ठा मात्र जग्गा छ। श्रीमान मजदुरी गर्नुहुन्छ। आम्दानीको श्रोत अरू केही नहुँदा परिवार धान्न तथा छोरा छोरी पढाउन पनि निकै गाह्रो थियो।

घरबाट बाहिर ननिस्किएकी म कसैलाई पनि चिन्दिनथें। एक दिन नेपाल अपाङ्ग महिला संघ का सदस्य विनिता शर्मा र लक्ष्मी पोखरेलसँग भेट भयो। त्यो संघका बारेमा त्यसैबेला थाहा पाएँ। उहाँहरूकै सहयोगमा ह्वीलचियर पाएँ। त्यो मेरा लागि निकै खुसीको कुरा थियो।

नेपाल अपाङ्ग महिला संघ ले कोहलपुर नगरपालिकामा रहेका अपाङ्गता भएका महिलाहरूको भेला गरेर सफल अपाङ्गता महिला समूह गठन गऱ्यो। त्यसमा म पनि सदस्य भएँ। त्यसको २ महिनामै नेपाल अपाङ्ग महिला संघ ले आयोजना गरेको ६ महिने सिलाइ कटाइ तालिममा म पनि सहभागी भएँ। तालिम सकिएपछि संघले मेशिन किन्न विउपुँजी पनि दियो।

तालिम लिइसकेपछि अपाङ्गता नवजीवन केन्द्रले सञ्चालन गरेको नवजीवन टेलर, जहाँ तालिम लिएको थिएँ, त्यसैमा काम गर्न थालें। त्यहाँ टेलरमा अरू पनि अपाङ्गता भएका महिला काम गर्थे। आफू जस्तै धेरै साथीहरूले काम गरेको देख्दा मलाई धेरै हौसला मिल्थ्यो। आफ्ना समस्याहरू सुनिदिने र सहयोग पाउन सकिने भएकाले त्यहीं काम गर्ने निर्णय गरेकी हुँ।

नेपाल अपाङ्ग महिला संघ को सम्पर्कमा पुगेर ह्वीलचियर लिएर घरबाट बाहिर निस्कन लागेपछि परिवार तथा समाजले यो कहाँ जानलागी, के गर्न लागी भनेर चियोचर्चो गर्नलागे। मैले सिलाइ कटाइ तालिम लिएर टेलरमा काम गरेको थाहा पाएपछि उनीहरूले अचम्म माने। उनीहरूमा केही न केही हदसम्म अपाङ्गता भएका महिलाले पनि अवसर पाए केहि गर्न सक्छन् भन्ने धारणको विकास भएको मैले पाएकी छु।

काम गर्न थालेपछि मासिक २५ सय रूपियाँसम्म कमाउन सक्ने भएकी छु। त्यसबाट मेरो जीविकोपार्जनमा सहजता आउन थालेको छ। आर्थिक अवस्थामा केहीमात्रामा भए पनि सुधार आएकाले मेरो परिवारमा खुसी छाएको छ। मेरो सिप देखेर परिवार र समाज नै दङ्ग छन्। परिवार तथा समाजले गर्ने म र मेरो परिवारप्रतिको व्यवहारमा परिर्वतन आएको छ।

म एक त पिछडिएको थारू समुदायकी। त्यसमा पनि महिला। अझ त्यसमा पनि अपाङ्गता भएकी। यिनै कारणहरूले समाजमा बोल्न सक्दिनथैं। समूहमा परिचयसम्म दिन नसक्ने थिएँ। नेपाल अपाङ्ग महिला संघ ले मेरो हौसला बढाइदियो। सिप सिकाएर मेरो आर्थिक तथा सामाजिक जीवनमा ठुलो सहयोग गऱ्यो। नेपाल अपाङ्ग महिला संघ लाई धेरै धन्यवाद दिए पनि कमी नै हुन्छ भन्ने लाग्छ मलाई। ◆

# प्रेरणाकी स्रोत बन्न सफल उमा

उमाकुमारी योगी




शिक्षक सेवा आयोग उत्तीर्ण गरेको खबर पाउँदाको क्षण नै उमाकुमारी योगीको जीवनमा सबैभन्दा खुसीको क्षण हो। त्यो खबरले परिवारमा पनि खुसी छायो। शारीरिकरूपमा अपाङ्गता भएकी उहाँले २०६९ सालमा शिक्षक सेवा आयोगको बारेमा जानकारी पाउनुभएको थियो।

सामान्य परिवारमा २०४३ साल फागुन २७ गते बाँके जिल्लाको बनकट्वा गा.वि.स.मा उहाँको जन्म भएको हो। उहाँको परिवारमा दिदी, बहिनी, भाइ र आमा–बुवा हुनुहुन्थ्यो। जन्मेको तीन महिनामा ज्वरो आएर उमा निकै विरामी पर्नुभयो।

लामो समयसम्म पनि उहाँको स्वास्थ्यमा सुधार आएन। शारीरिक अवस्था झन् कमजोर बन्दै गयो। दुवै हात खुट्टाले काम गर्न छाडे। घिस्रिएर हिड्ने गर्नुहुन्थ्यो। आमाबुवाले बोकेर विद्यालय पुऱ्याउने र ल्याउने गर्नुहुन्थ्यो।

बुबाको मात्र कमाइले उमाकुमारीको घर व्यवहार धान्न निकै धौ-धौ थियो। घर परिवारमा राम्रो व्यवहार भए पनि विद्यालयमा भने उनलाई साथीहरूले गिज्याउने, जिस्क्याउने गर्थे। विभिन्न उपनामले बोलाउने गर्थे। तै पनि उहाँले आफ्नो पढाइलाई निरन्तरता दिइरहनुभयो। विभिन्न समस्या र कठिनाइ भए पनि २०६० सालमा एस.एल.सी. परीक्षा दिनुभयो। दोश्रो पटकमा एस.एल.सी परीक्षा उत्तीर्ण हुनुभयो। घर नजिकै क्याम्पस, कलेज थिएनन्। पढाइलाई कसरी अगाडि बढाउने भन्ने विषयमा अन्योल भयो। त्यसै कारण निराश भएर चार वर्षसम्म घरमै बस्न वाध्य हुनुपऱ्यो।

**अपाङ्गता भए पनि परिवारबाट राम्रो व्यवहार भएकाले आफूप्रतिको समाजको दृष्टिकोण त्यति नराम्रो थिएन। अपाङ्गता भएकै कारणले 'यसले केही पनि गर्न सक्दिन' भन्ने सोच चाहिँ समाजको थियो। त्यति हुँदाहुँदै पनि उमाकुमारीले संघर्षका पाइला चाल्न भने छाड्नुभएन।**

अपाङ्गता भएका महिलाहरूसँगको भेटघाटका क्रममा नेपाल अपाङ्ग महिला संघ मा काम गर्ने दिदी-बहिनीसँग उहाँको भेट भयो। संघले गर्ने कामहरूका बारेमा थाहा पाउनुभयो। बाँके जिल्लाका कतिपय गा.वि.स. मा संघले अपाङ्गता भएका महिलाहरूको समूह गठन गरेको थियो। केही समयपछि बनकटवा गा.वि.स. मा पनि त्यस्तो समूह गठन गरियो, जसको नाम सूचना अपाङ्गता महिला समूह राखियो।

उमाले त्यो समूहको कोषाध्यक्ष भएर काम गर्ने मौका पाउनुभयो। विभिन्न तालिममा सहभागी भएर आफ्नो क्षमता बढाउँदै जानुभयो। अपाङ्गता भएका महिलाका अधिकार, अवसर र सहयोग गर्ने विभिन्न निकायका बारेमा थाहा पाउनुभयो। बचतलाई कसरी व्यवस्थित गर्ने, ऋण कसरी लगानी गर्ने जस्ता जनकारी समेत पाउनुभयो। नेपाल अपाङ्ग महिला संघ ले आयोजना गरेको ६ महिने कम्प्युटर तालिममा सहभागी हुने मौका पाउनुभयो। अपाङ्गता भएका व्यक्तिहरूले राज्यबाट पाउने सेवा-सुविधाका बारेमा थाहा भयो।

उमाकुमारी २०७१ भदौदेखि बाँके जिल्लाको वनकटुवामा रहेको श्री जनता माध्यमिक विद्यालयमा प्राथमिक तहको शिक्षिका भएर अध्यापन गरिरहनु भएको छ। अपाङ्गता भए पनि परिवारबाट राम्रो व्यवहार भएकाले आफूप्रतिको समाजको दृष्टिकोण त्यति नराम्रो थिएन। अपाङ्गता भएकै कारणले 'यसले केही पनि गर्न सक्दिन' भन्ने सोच चाहिँ समाजको थियो। त्यति हुँदाहुँदै पनि उमाकुमारीले संघर्षका पाइला चाल्न भने छाड्नुभएन।

उमाकुमारी भन्नुहुन्छ- नेपाल अपाङ्ग महिला संघ को सर्म्पकमा पुगेपछिको परिर्वतनले मेरो पारिवारका साथै समाज पनि खुशी देखिन्छ। समाज तथा परिवारमा अवसर पाएमा अपाङ्गता भएका महिलाले पनि केही गर्न सक्छन् भन्ने धारणा बढेको छ। संघले दिएको ६ महिने कम्प्युटर तथा अन्य तालिमकै कारण मेरो जीवनमा यतिका परिवर्तन आएको हो।

शिक्षिका भएर स्कुलमा अध्यापन गर्न थालेपछि उहाँको परिवार तथा समाज उहाँलाई देखेर दङ्ग पर्छन्। अहिले उहाँको परिवारको आर्थिक अवस्थामा समेत सुधार आएको छ। ◆

# महिला संँघले बढाएको मनोबल

इन्द्रावती राना



इन्द्रावती राना यतिबेला आफ्नै खर्चमा स्नातक (बी.ए) दोस्रो वर्षमा अध्ययनरत हुनुहुन्छ। २०४९ साल जेठ १८ गते रैकवारविचवा गा.वि.स.- ५, कलुवापुरमा जन्मनुभएकी उहाँमा जन्मदै शारीरिक अपाङ्गता थियो। उहाँले कक्षा १ देखी १० सम्म घरपरिवारको सहयोगमा पढ्नुभयो। नेपाल अपाङ्ग महिला संघ को पैरवीका कारण कक्षा ११ र १२ मा चाहिँ उच्च शिक्षा परिषद्बाट छात्रवृत्ति पाउनुभयो।

इन्द्रावतीको घरपरिवार अपाङ्गताप्रति सकारात्मक भए पनि समाजको दृष्टिकोण नकारात्मक थियो। गाउँबाट बाहिर जाँदा पनि छरछिमेकीले कुरा काट्थे। त्यस समयमा अपाङ्गता भएका व्यक्तिका लागि काम गर्ने संघ-संस्था हुन्छन् भन्नेसम्म पनि थाहा नभएको, छन् भन्ने कुरा त कल्पनै नगरेको उहाँ बताउनुहुन्छ।

यस्तो प्रतिकूल अवस्थामा पनि उहाँले सामान्य नेपाली महिलाले भन्दा बढी सफलता

पाउनु भएको छ। उहाँले नेपाल अपाङ्ग महिला संघ को सहयोगमा कम्प्युटरसम्बन्धी डिप्लोमा कोर्स गर्ने अवसर पाउनुभयो। यो तालिम लिनका लागि निकै लगानीका साथै रकम पनि लाग्ने गर्छ। एक महिने अवधिको समुदायमा आधारित पुनःस्थापनासम्बन्धीका साथै तालिम, बङ्गुर पालन, नेतृत्व विकास, समूह सञ्चालनसम्बन्धी तालिम लिने मौका पाउनुभएको छ।

**आफूमा आएको परिवर्तनले परिवारका साथै समाज पनि खुसी देखिन्छन्। परिवारमा आत्मबल बढेको छ। अपाङ्गता भएका छोरीलाई अवसर दिए प्रेरणाको स्रोत बन्ने र भविष्यमा आत्मनिर्भर बन्नसक्छन् भन्ने विश्वास बढेको मैले पाएकी छु।**

नेपाल अपाङ्ग महिला संघले २०६७ सालमा त्यस गा.वि.स.मा अपाङ्गता भएका महिलाहरूको समूह निर्माण गऱ्यो। अपाङ्गता भएका महिलाको सशक्तीकरणका लागि काम गर्ने त्यस समूहको सचिव भएर उहाँले काम गर्नुभयो। उहाँले त्यतिबेलाको अवस्था यसरी सुनाउनुभयो- त्यतिबेलासम्म पनि म अरू कुनै समूहमा आबद्ध थिइन। त्यस्ता समूह छन् भन्ने पनि थाहा थिएन। त्यसपछिमात्र मैले अपाङ्गता भएका व्यक्तिहरूका बारेमा धेरै कुरा थाहा पाएँ।

कम्प्युटर चलाउन सक्षम र विभिन्न क्षमता विकाससम्बन्धी अरू तालिम पनि लिनुभएकाले उहाँ गा.वि.स. स्तरीय विभिन्न कमिटिमा आवद्ध हुनुहुन्छ। अपाङ्गता समन्वय समितिको अध्यक्ष भएर अपाङ्गता भएका महिलाहरूका लागि काम गर्दै आउनुभएको छ। उहाँको त्यो प्रगति देखेर समाजमा अपाङ्गता भएका महिलाहरू प्रतिको दृष्टिकोण सकारात्मक हुँदै आएको उहाँको ठम्याइ छ। समाजका बुद्धिजीवीहरूले पनि यतिबेला उहाँसँग सहकार्य गर्दै आएको पाइन्छ।

उहाँ भन्नुहुन्छ- आफूमा आएको परिवर्तनले परिवारका साथै समाज पनि खुसी देखिन्छन्। परिवारमा आत्मबल बढेको छ। अपाङ्गता भएका छोरीलाई अवसर दिए प्रेरणाको स्रोत बन्ने र भविष्यमा आत्मनिर्भर बन्नसक्छन् भन्ने विश्वास बढेको मैले पाएकी छु। कम्प्युटर तालिमले मलाई सक्षम बनायो। मेरो काम देखेर अरू अपाङ्गता भएका महिलामा पनि हामी केही गर्न सकिन्छ भन्ने आत्मबल बढेको छ। ◆

# तिरस्कार गर्नेहरू पनि घुलमिल हुन थाले

कृष्णी चौधरी



उहाँलाई हिड्न गाह्रो हुन्छ। हिड्नै पर्दाको एउटैमात्र सहारा भनेकै ट्राइसाइकल (हातले घुमाएर हिडाउने तीनचक्के साइकल) हो। इच्छा हुँदा हुँदै पनि पढाइलाई निरन्तरता दिन सक्नुभएन। स्कुल घरबाट अलि टाढा थियो। बाटो पनि सजिलो थिएन। हात कामेर लेख्न गाह्रो भएकाले उहाँ उच्च शिक्षा प्राप्त गर्नबाट वञ्चित हुनभयो।

जन्मँदै रिकेट्स भन्ने शारीरिक अपाङ्गता भएकी कृष्णी चौधरीले तैपनि हरेश खानुभएन। कञ्चनपुर जिल्लाको रामपुर विलासीपुर गा.वि.स.- ७ मा २०४७ साल चैत १० गते उहाँको जन्म भएको हो। यतिबेला उहाँ गा.वि.स. स्तरीय अपाङ्गता समन्वय समितिको सदस्य हुनुहुन्छ। अपाङ्गता भएका महिलाहरूका लागि अधिकार एवं आय-आर्जनका काममा क्रियाशील हुनुहुन्छ।

उहाँको घरमा ७ जनाको परिवार छ। परिवारको आम्दानीको स्रोत भनेको एक बिघा जग्गामात्र रहेको छ। त्यसको आम्दानीबाट खान, लगाउन गाह्रो हुन्छ। आमाबुवाले खेती किसानी गरेर घरपरिवार चलाइरहेको जानकारी उहाँ दिनुहुन्छ। दाजुभाइजू अर्काको मजदुरीका साथै अरूको जग्गा अधिया बटैया गरेर घरपरिवारको खर्च जुटाउँछन्।

छ महिनामा त्यो बंगुर १२ हजार रूपियाँमा बिक्यो। केही रकम आफ्ना लागि खर्च गरी केही रकम घरमा सहयोग गरें। बाँकी रहेको तीन हजार रूपियाँले अर्को बंगुर किनेर पाले। त्यसपछि घरका सबैले मलाई माया गर्नथाले। तिरस्कार गर्ने समाजमा घुलमिल हुन र आफ्ना कुरा राख्न सक्ने भएकी छु।

कृष्णीका आमाबुवा अपाङ्गताप्रति सकारात्मक भए पनि समाजको दृष्टिकोण नकारात्मक थियो। सुरु सुरुमा उहाका दाजुभाउजू पनि अपाङ्गताप्रति नकारात्मक थिए। अपाङ्गताकै कारण घरको कामकाजमा सहयोग गर्न नसक्ने भएकाले कतिपय अवस्थामा अलि नराम्रो व्यवहार खप्नुपरेको अनुभव पनि उहाँ सुनाउनुहुन्छ।

अपाङ्गताकै कारण उनले समाजमा आफ्नो इच्छाले घुमफिर तथा बाहिर जान नपाएको उहाँले बताउनुभयो। उहाँको समाजमा महिलाले घरबाट बहिर जानु हुँदैन भन्ने मान्यता छ। त्यसमा पनि अपाङ्गता भएका महिलाले बाहिरी संसार बुझ्ने अवसर पाउँनु त निकै टाढाको कुरो हो।

अपाङ्गता भएका महिलाहरूको समूह बनाउने र अपाङ्गता भएका महिलाको सशक्तीकरणका लागि काम गर्ने उद्देश्यले २०६७ सालमा समूह निर्माण गर्दा उहाँ पनि सदस्य हुनुभयो। नेपाल अपाङ्ग महिला संघ को पहलमा बनेको समूहको सदस्य बनेपछि पनि केही समय परिवारका कतिपय सदस्यले हेला नै गरेको अनुभव उहाँले गर्नुपर्‍यो। समूहको भेलामा जान सहजै दिइएन। समूहका सबै सदस्यले उहाँमै पुगेर परिवारलाई सम्झाएपछि समूहमा आउन दिएको उहाँ बताउनुहुन्छ।

उहाँ भन्नुहुन्छ– समूह निर्माण भएपछि अपाङ्गता भएका महिलाहरूको शिक्षा, स्वस्थ्य, आर्थिक उपार्जन र नेतृत्व विकास, कानुनी विषयसम्बन्धी तालिमबाट अपाङ्गता भएका महिलाहरूका हक, अधिकार स्थापित गर्छ भन्ने कुरा थाहा पाएँ।

आफूमा आएको परिवर्तनले परिवार समाज खुसी देखिन्छ। परिवारमा अपाङ्गता भएका महिलाले पनि केही गर्न सक्छन् भन्ने आत्मबल बढाएको छ। अपाङ्गता भएका छोरीलाई अवसर दिएर प्रेरणा बढाएमा उनीहरू आत्मनिर्भर बन्न सक्छन् भन्ने विश्वास बढेको छ।

समूहबाट तालिमका साथै बंगुरपाल्नका लागि विउँपुजी पनि संघबाट प्राप्त भयो। बंगुर पाल्न उहाँका आमाबुवाले सहयोग गर्नुभयो। उहाँ सुनाउनुहुन्छ– छ महिनामा त्यो बंगुर १२ हजार रूपियाँमा बिक्यो। केही रकम आफ्ना लागि खर्च गरी केही रकम घरमा सहयोग गरें। बाँकी रहेको तीन हजार रूपियाँले अर्को बंगुर किनेर पाले। त्यसपछि घरका सबैले मलाई माया गर्नथाले। तिरस्कार गर्ने समाजमा घुलमिल हुन र आफ्ना कुरा राख्न सक्ने भएकी छु। हरेक सामाजिक कार्यमा मलाई पनि सहभागी गराइन्छ। ◆

# सिपले सुधार्‍यो जीवन

लक्ष्मी तिरुवा



नेपाल अपाङ्ग महिला संघले अपाङ्गता भएका महिलाको सशक्तीकरणका साथै उनीहरूका हक–अधिकारका लागि समूह निर्माणका लागि पहल गर्दै आएको छ। २०६८ सालमा कञ्चनपुर जिल्लाको रामपुर विलासीपुर गाउँ विकास समितिमा पनि अपाङ्गता भएका महिलाहरूको समूह निर्माण भयो। त्यसको सचिवमा लक्ष्मी तिरूवालाई छानियो।

समूह के हो, अपाङ्गता के हो, अपाङ्ता भएका त्यसमा पनि महिलाका अधिकार के हुन् भन्ने केही थाहा नभएको बताउने लक्ष्मीले समूहमा रहेर धेरै कुरा थाहा पाउनुभयो। उहाँ भन्नुहुन्छ– त्यस समयमा म अरू कुनै समूहमा थिइन। समूह निर्माण भएपछि सिलाइ तालिम लिने मौका पाएँ। सिलाइ कटाइ शुरू गर्न विउपुँजी पनि पाएँ।

रौतेली विचवा गा.वि.स.– ७ इमिलियामा २०४३ साल जेठ ३ गते लक्ष्मीको जन्म भएको हो। रामपुर विलासीपुर– ६, कलकत्तामा बसोबास गर्दै आएका करण तिरूवासँग २०६७ साल मंसिरमा उहाँको

विवाह भयो। उहाँहरूका ३ वर्षका छोरा छन्। उनको घरमा १८ जनाको परिवार छ। ससुराका नाममा २ कट्टामात्र जमिन छ। त्यसैमा ४ दाजुभाइ बस्दै आउनु भएको छ। घरवासकै लागि पनि अप्ठ्यारो छ। आयस्रोतको कमीकै कारण सबै दाजुभाइले एउटै भान्सा गर्दै आउनुपरेको छ।

आर्थिक स्थितिले गर्दा लक्ष्मीले आफ्नो पढाइलाई निरन्तरता दिन सक्नुभएन। ठूलो धोको

**लक्ष्मीको सफलता देखेको उहाँको घर-परिवार तथा सामजमा अपाङ्गता भएका महिलाले पनि केही गर्न सक्छन् भन्ने सकारात्मक सोच बढेको छ। अपाङ्गता भएका छोरी-बुहारीलाई अवसर एवं प्रेरणा दिन सके उनीहरू आत्मनिर्भर बन्न सक्छन् भन्ने विश्वास बढेको छ।**

हुँदाहुँदै पनि पढ्ने अवसर पाउनुभएन। बिहे भएपछि कक्षा ११ र १२ सम्म अध्ययन गरेको जानकारी उहाँ दिनुहुन्छ। उहाँ भन्नुहुन्छ–एक त अपाङ्गता भएको महिला त्यसमा पनि दलित परिवारको। एकदमै दु:खकष्ट भोग्नुपर्‍यो।

दुई वर्षको उमेरमा पोलियो भएर लक्ष्मीले शारीरिक अपाङ्गता व्यहोर्नुपर्‍यो। घर-परिवार तथा समाजबाट सहयोग नपाउँदा पढाइ ढिलो शुरू भयो। घर-परिवार तथा समाजको उहाँप्रतिको दृष्टिकोण सकारत्मक थिएन। समाजले कुनै कामका लागि अवसर दिएन।

लक्ष्मी तिरूवा आफ्नो अतीत यसरी सुनाउनुहुन्छ– अपाङ्गता भएका महिलालाई समाजको बोझको रूपमा हेरिन्थ्यो। अनेकथरीका कुरीतिका कुरा गरेर आत्मबल घटाएको अवस्था थियो। कुनै पनि शुभकार्यमा जानबाट वञ्चित गरिन्थ्यो। अपाङ्गता भएका महिलाले केही गर्न सक्दैनन् भन्ने सोच हाम्रो समाजमा रहेको छ।

अपाङ्गता भएका महिलाप्रतिको समाजको नकारात्मक सोचको ओठे जवाफ लक्ष्मीले आफ्नै खुट्टामा उभिएर दिनुभएको छ। उहाँ समाज परिवर्तन गर्न लम्कनु भएको छ। उहाँ भन्नुहुन्छ– नेपाल अपाङ्ग महिला संघ को सहयोगमा सिलाइ कटाइ तालिमका साथै विभिन्न क्षमता विकास तालिम लिएपछि अहिले सिलाइ कटाइको पसल गरेकी छु। यसका साथै गाविस स्तरिय विभिन्न कमिटिमा पनि रहेर काम गर्दै छु। अपाङ्गता समन्वय समितिको अध्यक्ष, पैरवी मञ्चको सदस्य, दलित संघको सचिव भएर अपाङ्गता भएका महिलाका हक-अधिकारका लागि आवाज उठाउँदै आएकी छु।

लक्ष्मीको सफलता देखेको उहाँको घर-परिवार तथा सामजमा अपाङ्गता भएका महिलाले पनि केही गर्न सक्छन् भन्ने सकारात्मक सोच बढेको छ। अपाङ्गता भएका छोरी-बुहारीलाई अवसर एवं प्रेरणा दिन सके उनीहरू आत्मनिर्भर बन्न सक्छन् भन्ने विश्वास बढेको छ। अहिले समाजका बुद्धिजीवीले उहाँसँग सहकार्य गरेर काम गर्दै आएको पाइन्छ। त्यतिमात्र नभई लक्ष्मी तिरूवाले अनौपचारिक शिक्षा कार्यक्रममा शिक्षिका भएर अपाङ्गता भएका महिला र तिनका अभिभावकका साथै अरूहरूलाई समेत पढाउने मौका पाउनुभएको छ। ◆

# छोरीको सिपले बढाएको मनोबल

जानकी राना



छोरीले गरेको प्रगतिका कारण जानकी रानाको जीवनमा रमाइला दिन आउन थालेका छन्। उहाँप्रतिको समाजको दृष्टिकोणमा पनि सकारात्मक परिवर्तन आएको छ। आर्थिक अवस्थामा पनि सुधार आएको छ।

जानकी राना आंशिक दृष्टिबिहिन अपाङ्गता भएकी महिला हुनुहुन्छ। आँखा पाक्ने बिरामीका कारणले उहाँले अपाङ्गता व्यहोर्नु परेको हो। त्यतिबेला उहाँ १४ वर्षकी हुनुहुन्थ्यो। उहाँको जन्म २०३३ साल वैशाखमा रौतेली विचवा गा.वि.स. इमिलियामा भएको हो। उहाँको घरपरिवार तथा समुदायमा प्रायः छोरीलाई पढाउने चलन थिएन।

उहाँको विवाह रामपुरविलासीपुरमा भयो। अपाङ्गता भएकै कारण दुई छोरा दुई छोरी भए

आफू साङ्ग र श्रीमती अपाङ्गता भएका र समाजका कारण पनि उनका श्रीमानले दोस्रो विवाह गरे। श्रीमानले नै नकारात्मक दृष्टिले हेर्नेका श्रीमतीलाई समाजले कहिल्यै सकारात्मक दृष्टिले हेर्दैन।

पनि उहाँका श्रीमानले हेला गर्दै आए। उनले दोस्रो विवाह समेत गरे। उहाँ भन्नुहुन्छ– मेरो अपाङ्गताकै कारण श्रीमानले मलाई मानसिक तथा शारीरिक तनाबसमेत दिने गर्थे।

आफू साङ्ग र श्रीमती अपाङ्गता भएका र समाजका कारण पनि उनका श्रीमानले दोस्रो विवाह गरे। श्रीमानले नै नकारात्मक दृष्टिले हेर्नेका श्रीमतीलाई समाजले कहिल्यै सकारात्मक दृष्टिले हेर्दैन। यस्ता पीडादायी अवस्थालाई जानकीले छोरा-छोरीकै लागि सहनुभयो। घर-परिवार तथा समाजका अगाडि आफ्नो पीडा सहेर बाँचेको उहाँ बताउनुहुन्छ।

जानकी रानाले भारतमा भाँडा माझेर आफ्ना १ छोरा र १ छोरीलाई सकि नसकी कक्षा ३ सम्म पढाउनुभयो। कान्छी छोरीले अरूको घरमा काम गरेर पढ्नुभयो। अहिले मुक्त कमलरी भएर होस्टेलमा बसेर पढिरहनुभएको छ। एउटा छोरा भारतमा काम गर्दै आफ्ना भाइ-बहिनी र आमालाई हेर्दै आएका छन्।

उहाँ सम्झनुहुन्छ– परिवारका सदस्यमा सासूले अलि माया गर्नुहुन्थ्यो तर बिरामी परेर अकालमै उहाँले ज्यान गुमाउनु पर्‍यो। घरको आर्थिक स्थिति दयनीय भएकाले छोरा-छोरीलाई पढाउन सकिएन। जेठो छोरोले कक्षा ५ सम्म मात्र पढ्ने अवसर पायो। जेठी छोरी घरको काम कागजमा मात्र सिमित रही। बाहिरी वातारणका बारेमा केहि थाहा नपाएको र आफूले घरको काम गर्न नसक्ने भएकाले उसलाई विद्यालय पठाउन पनि पाइएन।

समयको गति रोकिंदैन। समय बित्दै जाँदा २०६९ सालमा नेपाल अपाङ्ग महिला संघ का बारेमा उहाँले थाहा पाउनुभयो। त्यतिवेला संघले रामविलासीपुर गाविस मा अपाङ्गता भएका महिलाहरूको समूह बनाउन लागेको थियो। उहाँ सुनाउनुहुन्छ– अपाङ्गता भएका महिलाको सशक्तीकरण गर्ने थाहा पाएर म पनि समूहमा सदस्य भएँ। त्यतिबेलासम्म पनि म अरू कुनै समूहमा आबद्ध थिइँन। समूहमा नियमित वचत गर्न थालें। आफूले तालिम लिन नसक्ने लागेर छोरीलाई तालिम उपलब्ध गराइदिन संघलाई अनुरोध गरें। छोरीले सिलाइ तालिमका साथै सिलाइ कटाइको काम शुरू गर्न विउपुँजी पनि पाइन्।

यतिबेला परिवार, समाजमको आफूप्रतिको दृष्टिकोणमा परिवर्तन आएको उहाँ सुनाउनुहुन्छ। अपाङ्गता भएका महिलाले पनि केही गर्न सक्छन् भन्ने आत्माबल बढाएको उहाँले अनुभव गर्नुभएको छ। जानकी रानाका श्रीमानकी दोस्री पत्नीले पनि उहाँकी छोरीलाई राम्रो गर्नथालेकी छिन्।

जानकीकी छोरीको काम देखेर त्यो गाविस तथा समूहका अरू सदस्यको पनि आत्मावल बढेको छ। छोरीले घरको आर्थिक स्थितिमा सहयोग गरिरहेको र आफैंले गरेको बंगुरपालनका कारण पनि जीवनयापन सहज भएको उहाँ बताउनुहुन्छ। यसका लागि उहाँ नेपाल अपाङ्ग महिला संघलाई धन्यवाद दिनुहुन्छ। ◆

# अन्धविश्वासको शिकार अपाङ्गता भएका महिला

नन्दा साउद



हाम्रो समाजमा रहेका कतिपय मान्यता आजको समय सुहाउँदा छैनन्। धेरै सोच वास्तविकता वा यथार्थमा आधारित पाइँदैनन्। छोरो नभए पीण्डपानी पाइँदैन भन्ने मान्यताले गर्दा कतिपय आमाबाबुले आर्थिक, पारिवारिक अवस्थाले धान्ने भन्दा बढी सन्तान हुर्काउनु परिरहेको छ। त्यसरी धेरै सन्तान हुँदा उनीहरूले राम्रो शिक्षादीक्षाका साथै स्वास्थ्य उपचार नपाइरहेको अवस्था छ।

कथित स्वर्ग पाउने आशमा बहुविवाह, अनमेल विवाह हुनेगरेका छन्। झण्डै हजुरबाको उमेरका व्यक्तिसँग विवाह गर्न बालिकाहरूलाई वाध्य गरिँदै आएको छ। नन्दा साउद त्यसरी विवाह बन्धनमा बाँधिनेमध्येकी एक हुनुहुन्छ। अपाङ्गता भएका महिलासँग साङ्ग व्यक्तिले विवाह गर्दैनन्

भन्ने सोचकै कारण ५० वर्षका व्यक्तिसँग दोस्री श्रीमतीका रूपमा उहाँको विवाह गराइयो।

जस्तोसुकै व्यक्तिसँग भए पनि विवाह गराइदिनु पर्छ, नत्र स्वर्ग पुगिंदैन र ती महिलाको मरेपछि गर्ने संस्कार समेत गरिंदैन भन्ने कारणले नै उहाँको यस्तो अनमेला विवाह भएको हो। पहिलो श्रीमतीबाट सन्तान नभएकाले अपाङ्ता भएकै भए पनि सन्तानका लागि उहाँसँग विवाह गर्न उहाँका श्रीमान सहमत भएको देखिन्छ। जग्गा–जमिन भएकाले छोरीलाई सुख मिल्छ भनेर पनि नन्दाका अभिभावकले त्यसरी बिहे गरिदिएका हुन्। सोह्र–सत्र वर्षको उमेरमा ५० वर्षका जयदेव साउँदसँग नन्दाको बिहे भयो।

नन्दा कञ्चनपुर जिल्लाको सुडा गा.वि.स.– ६, गाउँजीमा बस्नुहुन्छ। उहाँको जन्म २०२८ साल असारमा भएको हो। सानै उमेरमा उच्चज्वरोका कारण पोलियो भएर उहाँको दायाँ खुट्टा कमजोर भयो। खुट्टा नसमाती हिडन् अप्ठ्यारो भएकै कारण उहाँको पढाइ सफल हुनसकेन। घरबाट स्कुल धेरै टाढा थियो। स्कुलसम्म पुऱ्याउने तथा सहयोगी नभएका कारणले पनि उहाँ पढाइमा पछि पर्नुभयो। सकी नसकी प्रवेशिका (एस.एल.सी.) सम्म पढ्ने अवसर पाउनुभयो।

नन्दाप्रतिको समाजको दृष्टिकोण सकारात्मक थिएन। अपाङ्गता भएर बाँच्नु भन्दा मरेको भए हन्थ्यो, पूर्वजन्ममा उनका बुबा आमाले पाप गरेका कारण आज यो परिणम भोग्नुपरेको जस्ता दुर्वचन उहाँले सुन्नुपऱ्यो।

श्रीमानले दुवै श्रीमतीलाई राम्रो गरे पनि सौताले आफूसँग कहिल्यै राम्रो व्यवहार नगरेको उहाँ सुनाउनुहुन्छ। नन्दा आफ्ना ती दिन यसरी सम्झनुहुन्छ– सुरु सुरुमा श्रीमानसँग आफ्ना विरुद्ध कुरा लगाएर धेरै दुःख दिइन्। मैले जतिसुकै काम गरे पनि त्यस्तो कामको मूल्याङ्कनै गरिएन्। परिवारमा अपाङ्गता भएका महिलाले गरेको काम राम्रो हुदै हुँदैन भन्ने सोच थियो। त्यस्तोमा एक त अपाङ्गता भएको महिला अनि सौता पनि हुँदा कस्तो पीडा खप्नुपऱ्यो होला ?

विविधखाले दुःखकष्ट व्यहोर्दै नन्दा साउदको जीवन चलिरहेको थियो। समय बित्दै जाँदा उहाँ छोराको आमा बन्नुभयो। छोरो जन्मपछि श्रीमानले अझै राम्रो गर्न थालेको र सौताको व्यवहारमा पनि परिवर्तन आएको उहाँ सम्झनुहुन्छ। नन्दाको विवाह पश्चात उनको सौता अलगै छुटिएर बस्नु भयो। श्रीमानको अलि पाको उमेर र आफू अपाङ्गता भएको हुँदा सानो बच्चा हुर्काउन उहाँलाई निकै कष्ट भयो। उहाँ भन्नुहुन्छ– सकी नसकी घरको काम र बच्चाको राम्रैसँग स्याहार गर्ने प्रयास गरेँ।

नेपाल अपाङ्ग महिला संघले २०६७ सालमा नन्दाको गाउँमा अपाङ्गता भएका महिलाहरूको समूह निर्माण गऱ्यो। नन्दाले त्यो समूहको सचिव पदमा रहेर काम गर्न पाउनुभयो। उहाँ सुनाउनुहुन्छ– नेपाल अपाङ्ग महिला संघले अपाङ्गता भएका महिलाका हक अधिकार, नेतृत्व बिकास, कानुनी सचेतना साथै व्यवसाय सञ्चालनसम्बन्धी तालिम आयोजना गऱ्यो। ती तालिममा सहभागी हुन पाउँदा अपाङ्गताबारे थप धेरै कुरा थाहा पाएँ।

संघसँगको सम्पर्कपछि आएको परिवर्तनले उहाँ समाजमा अपाङ्गता भएका व्यक्तिको बारेमा कुरा राख्न सक्ने हुनुभएको छ। समाजले पनि अपाङ्गता भएका महिलाले पनि केही गर्न सक्छन् भन्ने सोच्न थालेको छ। अपाङ्गता भएका महिलामा पनि साङ्ग महिला जस्तै काम गर्न सकिने रहेछ भन्ने विश्वास बढेको छ। ◆

# सिलाइबाट आत्मनिर्भर

लक्ष्मी महरा




लक्ष्मी महराले १२ कक्षासम्म पढ्ने मौका पाउनुभयो। उहाँको घरको आर्थिक अवस्था ज्यादै कमजोर थियो। जग्गाको आम्दानीबाट खान लाउन धौ–धौ नै थियो। उहाँका दाजु भाइ छुट्टिएर बसेका थिए। नेपाल अपाङ्ग महिला संघ को पहलमा उच्च शिक्षा परिषद्बाट छात्रावृत्ति पाएर उहाँले पढाइलाई अगाडि बढाउनु पाउनुभएको हो।

कञ्चनपुर जिल्लाको रैकवारविचवा गा.वि.स.– ४ मा २०४८ साल चैतमा उहाँको जन्म भएको हो। दुई वर्षको उमेरमा उहाँ शारीरिक अपाङ्गताको शिकार हुनुभयो। आर्थिक अवस्था कमजोर भएकै कारण उहाँको पोलियो रोगको उपचार हुन सकेन। अपाङ्गता भए पनि उहाँले पढ्ने इच्छालाई भने मर्नदिन सक्नुभएन। विभिन्न समस्या छिचोल्दै पढाइलाई निरन्तरता दिनुभयो।

अपाङ्गता भएकै कारण उहाँप्रतिको समाजको दृष्टिकोण फरक थियो। अपाङ्गतालाई विभिन्न उपनाम दिएर मनोवल घटाउने काम गरिए।

त्यति हुँदाहुँदै पनि उहाँले हरेश खानुभएन। उहाँ भन्नुहुन्छ– आफ्नो मनलाई दह्रो पारेँ, त्यही समाजमा संघर्ष गरेर बाँच्ने प्रण गरेँ।

**अहिले लक्ष्मीको आर्थिक अवस्थामा सुधार आएको छ। सिलाइ कटाइको सीपबाट मासिक चार हजार रूपियाँसम्म आम्दामी हुनेगरेको उहाँ सुनाउनुहुन्छ। आफ्नै खुट्टामा उभिएर बाँच्न सकेकोमा उहाँ धेरै खुशी देखिनुहुन्छ। उहाँको प्रगति देखेर उहाँको घर–परिवारका साथै समाजका मान्छेहरू दंग देखिन्छन्।**

समय बित्दै जाँदा लक्ष्मी महरा नेपाल अपाङ्ग महिला संघ को सम्पर्कमा पुग्नुभयो। त्यसमा क्रियाशील दिदी बहिनीहरूसँगको भेटपछि त्यो संस्था र संस्थाले गर्ने कामको बारेमा जान्ने मौका पाउनुभयो। अपाङ्गता के हो र राज्यबाट अपाङ्गता भएका व्यक्तिहरूले के कस्ता सुविधा पाउँन सक्छन् भन्ने थाहा भयो।

नेपाल अपाङ्ग महिला संघ को पहलमा उहाँको गा.वि.स मा अपाङ्गता भएका महिलाहरूको समूह निर्माण गरियो। लक्ष्मी पनि त्यस समूहको सदस्य बन्नुभयो। नेपाल अपाङ्ग महिला संघ को नेतृत्वमा आयोजित विभिन्न तालिममा सहभागी हुने मौका पाउनुभयो। यस्ता तालिमबाट उहाँले अपाङ्गतासम्बन्धी ऐन, नियम र कानूनका विषयमा जान्ने मौका पाउनुभयो। आफु जस्तै साथीहरूलाई समेत त्यस्ता कानूनका बारेमा बताउन सक्ने हुनुभयो।

नेपाल अपाङ्ग महिला संघको सहयोगमा सिलाइ कटाइ तालिममा सहभागी हुने अवसर पाउनुभयो। यो तालिम लिएपछि उहाँ यतिबेला सिलाइ कटाइ सिकाउन सक्ने हुनुभएको छ। उहाँ सुनाउनुहुन्छ– अपाङ्गता भएका महिलाको सशक्तीकरणका लागि दिइएको तालिमसँगै सिलाइ कटाइ शुरू गर्न विउँपुँजी पनि पाएँ। अपाङ्गता भएका साथै अरू महिला पनि मसँग सिलाइ कटाइ सिक्न आउने गरेका छन्।

अहिले लक्ष्मीको आर्थिक अवस्थामा सुधार आएको छ। सिलाइ कटाइको सीपबाट मासिक चार हजार रूपियाँसम्म आम्दामी हुनेगरेको उहाँ सुनाउनुहुन्छ। आफ्नै खुट्टामा उभिएर बाँच्न सकेकोमा उहाँ धेरै खुशी देखिनुहुन्छ। उहाँको प्रगति देखेर उहाँको घर–परिवारका साथै समाजका मान्छेहरू दंग देखिन्छन्।

उहाँ भन्नुहुन्छ– संघले अपाङ्गता भएका महिलाहरूको शिक्षा, स्वस्थ्य, आर्थिक उपार्जन र नेतृत्व विकासका कार्यक्रमबाट उनीहरूका हक, अधिकार स्थापित गर्न महत्वपूर्ण काम गरिरहेको छ। त्यस्ता तालिम लिएपछि मैले आफु जस्तै अपाङ्गता भएका दिदी–बहिनीलाई सिकाउन सक्ने भएकी छु। मलाई यो अवस्थासम्म ल्याइ पुऱ्याउनमा नेपाल अपाङ्ग महिला संघको ठूलो भूमिका छ। ◆

# लगनशीलताबाट सफल

अञ्जु दाहाल




दह्रो इच्छाशक्ति र लगनशीलता भए अवसर लाम लागेर आइपुग्छन्। त्यसका लागि समय र आफूले सिकेका कुरालाई भने सही तरिकाले उपयोग गर्न जान्नुपर्छ। आगोले पोल्छ भन्ने पनि ज्ञान नपलाइसकेको अवस्थामै हात र खुट्टा आगोले खाएर अपाङ्गता व्यहोर्न वाध्य अञ्जु दहाल त्यसको जिउँदो उदाहरण हुनुहुन्छ।

तेह्रथुम जिल्लाको फाक्चामारामा ३३ वर्ष अघि तेस्रो सन्तानका रूपमा उहाँको जन्म भयो। घरको आर्थिक अवस्था निकै कमजोर थियो। बिहान–बेलुकीको छाक टार्ने पनि उहाँका आमा–वुवाले मेलापात गर्नुपर्थ्यो। उहाँलाई दाजु र दिदीसँग छाडेर आमाबुबा मेलापात जानुहुन्थ्यो।

एकदिनको कुरा हो, निकै जाडो भएकाले सानै उमेरका दाजु अञ्जुलाई अगेनाको नजिकै राखेर खेल्न निस्के। भर्खर सात/आठ महिनाकी अञ्जुले सुतेर उठदा वरपर कसैलाई पनि देख्नुभएन। घस्रँदै जाँदा आगो रहेको अँगेनामा पर्नुभयो।

केही समयपछि मात्र उहाँका आमा–बुबा फर्कनुभयो। त्यतिबेलासम्म उहाँका दुवै गोडाका सबै औंला जलिसकेका थिए। पहाडको ठाउँ, नजिकै स्वास्थ्य संस्था थिएन। घरमै सामान्य जडिबुटी लगाइयो। आर्थिक अवस्था कमजोर भएकाले अन्य उपचारमा पहल नहुँदा उहाँले दुवै खुट्टाका औंला गुमाउनुपर्‍यो।

अञ्जुलाई सानो छउञ्जेल त त्यति वास्ता भएन। ठूलो हुँदै गएपछि भने उहाँलाई हिडडुल गर्न समस्या हुनथाल्यो। अरू साथीहरू जस्तै खेल्न रूचाए पनि अपाङ्गता भएकै कारण साथीहरूले उहाँलाई जिस्काउने गर्थे। त्यसपछि भने उहाँलाई अरू भन्दा आफू फरक रहेको अनुभूति हुनथाल्यो।

करिब छ/सात वर्षको उमेरदेखि उहाँ विद्यालय जान थाल्नुभयो। मानिसहरू उहाँलाई अनौठो मानेर हेर्नेगर्थे। उहाँको हिँडाइ देखेर उनीहरू 'यसरी पनि किन पढ्नु परेको होला, पढेरै पो के गर्छे र' भनेर कुरा काट्थे। त्यति हुँदा पनि उहाँले विद्यालय जान भने छाड्नु भएन। राम्रोसँग पढेर सफल मान्छे बन्ने सपना उहाँमा थियो। पढाइलाई निरन्तरता दिदै जानुभयो। तेह्रथुम जिल्लाबाटै २०५६ सालमा प्रवेशिका (एसएलसी) पास गर्नुभयो।

उच्चशिक्षा पढ्न उहाँलाई वातावरण सहज भएन। पछि उहाँ मोरङ्ग जिल्लामा रहेको सुकुना उच्च माध्यमिक विद्यालयमा पढ्न थाल्नुभयो। पढाइ नै जीवनको अमूल्य पाटो हो भन्ने सम्झेर कोठा भाडामा लिएर बस्नुभयो। त्यसै विद्यालयबाट उहाँले शिक्षाशास्त्रमा स्नातक (बि.एड.) पास गर्नुभयो।

धेरैखाले बाधालाई छिचोल्दै बि.एड. पास गरे पनि उहाँले रोजगारी भने पाउन सक्नुभएन। घरमै बस्न थाल्नुभयो। त्यसैबेलामा उहाँ नेपाल अपाङ्ग महिला संघको सम्पर्कमा पुग्नुभयो। अपाङ्गता भएका महिलाको हकहितमा काम गर्ने संघका गतिविधिमा संलग्न हुनथाल्नुभयो। पछि उहाँ महिलाहरूको स्वावलम्बन समूहको संयोजकसमेत छानिनुभयो।

अञ्जुले समूहमा बसेर काम गर्नुका साथै विभिन्न किसिमको तालिम पनि लिनुभयो। अपाङ्गता भएका महिलाहरूको हक–अधिकारका निम्ति वकालत गर्न थाल्नुभयो। 'संघबाट प्राप्त विउपुँजीले बाख्रापालेर पढाइलाई निरन्तरता दिने मौका पाएको' उहाँ बताउँनुहुन्छ।

म मात्रै अपाङ्गता भएकी हुँ भन्ने आफ्नो सोचमा परिवर्तन आएको उहाँ सगर्व सुनाउनुहुन्छ। संघबाट विभिन्न किसिमका क्षमता अभिवृद्धि तालिममा सहभागी भएर आफूलाई सक्षम बनाउन सफल भएकोमा खुशी व्यक्त गर्नुहुन्छ। महिला संघका गतिविधिले बढाएको आत्मबल र निरन्तरको वकालतले आज उहाँलाई रोजगार बनाएको छ। यतिबेला उहाँ मल–बिऊ कम्पनिमा एकाउन्ट पदमा जागिरे भएर आत्मनिर्भर जीवन निर्वाह गरिरहेको बताउँनुहुन्छ।

पहिले कुरा काट्ने साथीहरूका साथै छरछिमेकीको आफूप्रतिको व्यवहार निकै फरक रहेको जानकारी उहाँले दिनुभएको छ। 'अहिले आफूलाई सफल भएको महसुस भएको' उहाँ बताउनुहुन्छ। अहिले उहाँ आफू जस्तै अपाङ्गता भएका व्यक्तिहरूलाई पनि गहकीला सन्देश दिदै अपाङ्गता भएका दिदी–बहिनीलाई आत्मनिर्भर बन्न अनुरोध गर्नुहुन्छ। उहाँ भन्नुहुन्छ– अपाङ्गता भए पनि आफ्नो कर्तव्य भने कहिल्यै पनि भुलिन। ◆

# प्रयास गरे सफल हुन सकिन्छ

जानुका धिमाल




'नखाइको विष लाग्छ' वा 'ओह्वालो लागेको मृगलाई बाच्छाले पनि खेद्छ'। यी नेपाली समाजमा प्रचलित भनाइ हुन्। यी भनाइको अर्थ जानुका धिमालको जीवनमा ठ्यक्कै लागू भएर आए। मानिसको जीवनमा कतिबेला के हुन्छ भन्ने थाहा नहुने कुरा उहाँको जीवनमा देखापरेको छ।

सामान्य आर्थिक अवस्था रहेको परिवारकी उहाँ १५ वर्षसम्म सामान्य साथी, बहिनी, छोरी नै हुनुहुन्थ्यो। त्यसपछि उहाँको खुट्टामा साना-साना फोका निस्के। फोका फुटेर पानी बग्न थाल्यो। विस्तारै त्यो घाउ चिलाउनुका साथै खुट्टा मोटा मोटा भएर सुन्निन थाले। डाक्टरलाई जचाउँदा थाहा भयो- उहाँलाई हात्तीपाइले नामको रोग लागेको रहेछ।

हिजोसम्म सँगै हिड्ने साथीहरू, घर परिवारका सदस्यलगायत समाजका मानिसको उहाँप्रतिको हेराइमा परिवर्तन आउन थाल्यो। दिदीहरूले समेत 'तेरो रोग सर्छ, हामीसँग

नबस्' भन्न पनि पछि परेनन्। उहाँलाई घरमा बस्नसमेत दिइएन। साथी-सङ्गी टाढा हुनथाले। समाजमा हुने क्रियाकलापमा समेत सहभागिताबाट वञ्चित हुनुपर्‍यो।

संघको सम्पर्कमा आएर नै उहाँले तालिमलगायतका गतिविधिमा सहभागी हुन पाउनुभयो। आफू जस्तै अपाङ्गता भएका महिलालाई उहाँका सल्लाह एवं सुझाव छ- अपाङ्गता भएर रोएर बस्नुहुँदैन। आफूमा भएको क्षमताको सदुपयोग गर्नुपर्छ। प्रयास गरे सफल हुनसकिन्छ। ◆

आत्मसम्मानमा समेत ठेस लाग्ने शब्दहरू सुन्न बाध्य उहाँ उपचारका लागि धेरै ठाँउमा भौतारिन थाल्नुभयो। काठमाडौंमा उपचार गराउनुभयो। यो रोग पूरै निको पार्ने औषधि आजसम्म आइसकेको छैन। डक्टरको सल्लाह अनुसार त्यसको रोकथामका लागि पहल गरिएको छ।

हाम्रो समाजमा अझै पनि रूढिवादी परम्पराको जरो उखेलिन सकेको छैन। अपाङ्गता भनेको पूर्वजन्मको पाप हो भन्ने सोचमा परिवर्तन आइसकेको छैन। पहिलेको तुलनामा केही परिवर्तन आए पनि समाजमा अपाङ्गता भएका महिलाले कष्टकर जीवन बिताउनु परिरहेको छ। सहरी क्षेत्रमा भने केही अपाङ्गता भएका शिक्षित व्यक्तिले रोजगार पाएको देखिन्छ तर त्यस्तो सङ्ख्या ज्यादै कम छ।

जीवन भोगाइका क्रममा जानुका अपाङ्गता भएका महिलाहरूको संघ-सस्थामा आवद्ध हुन थाल्नुभयो। 'स्वावलम्बन जीवन समूहमा आबद्ध रही काम गर्ने मौका पाएबाट आफ्नो जीवनमा धेरै परिवर्तन आएको महशुस गर्न थालेको' उहाँ सुनाउनुहुन्छ। उहाँ विभिन्न विषयका तालिममा सहभागी हुनुभयो। अपाङ्गता भएका व्यक्तिहरूकै हक अधिकारको निम्ति काममा सक्रिय भई नेतृत्व विकाससम्बन्धी तालिम लिनुभयो।

नेपाल अपाङ्ग महिला संघले दिएको सिलाइ बुनाइ तालिम लिएपछि उहाँले व्यवसाय शुरू गर्नुभएको छ। आफू जस्तै अपाङ्गता भएका व्यक्तिहरूलाई सिलाइ बुनाइका काम सिकाउने गर्नुभएको छ। उहाँ भन्नुहुन्छ- आठ जना अपाङ्गता भएका महिलालाई सिकाएर सक्षम बनाउने काममा लागेकी छु। आफ्नो पनि आत्मविश्वास बढ्दै छ। अपाङ्गता भएकै कारण घरमा सिमित हुन नहुने निष्कर्षमा उहाँ पाइनुहुन्छ।

यतिबेला महिनाको आम्दानी नौ हजार रूपियाँसम्म रहेको जानुका बताउनुहुन्छ।आत्मनिर्भर भएपछि घरपरिवारका सदस्यलगायत सबै आफ्नो नजिक हुनथालेको अनुभव आफूलाई भएको जानकारी पनि उहाँले दिनुभयो। अपाङ्गताका बारेमा उपनाम दिनेहरूलाई प्रशस्त उदाहरणहरू दिएर राम्रोसँग सम्झाउन उहाँ सफल देखिनुहुन्छ।

जानुकाको जीवनमा परिवर्तन ल्याउनमा नेपाल अपाङ्ग महिला संघको भूमिका रहेको छ। संघको सम्पर्कमा आएर नै उहाँले तालिमलगायतका गतिविधिमा सहभागी हुन पाउनुभयो। आफू जस्तै अपाङ्गता भएका महिलालाई उहाँका सल्लाह एवं सुझाव छ- अपाङ्गता भएर रोएर बस्नुहुँदैन। आफूमा भएको क्षमताको सदुपयोग गर्नुपर्छ। प्रयास गरे सफल हुनसकिन्छ। ◆

# आटँ भए असम्भव केही छैन

पूर्णी खवास



पूर्णी खवासको जन्म सामान्य आर्थिक अवस्था रहेको परिवारमा वि.सं. २०१८ सालमा मोरङ्ग जिल्लामा भएको हो। उहाँ सामान्य जीवन गुजार्ने क्रममा स्वास्थ्य स्वयं सेविकाका रूपमा काम गर्दै हुनुहुन्थ्यो। एकदिन एक्कासी उहाँको आँखा चिलाउन थाल्यो। घर गएर आमालाई आँखा पाकेको हो कि भनेर सुनाउनुभयो। आमाले विभिन्न झारपात निचोरेर आँखामा हालिदिनु भयो। त्यसपछि त झनै बढी दुख्न थाल्यो। धामी झाक्री र झारफूक गर्न थालियो। दुई/तीन महिनापछि उहाँका दुवै आँखाको ज्योति गुमे।

वैवाहिक जीवनमा बाँधिएर सामान्य घर-व्यवहार चलाइरहेनु भएकी उहाँलाई हुनुसम्मको डरले सतायो। हिजोसम्म माया गर्ने श्रीमानले अब के हेर्लान् र भन्ने सम्झँदै दिनरात रून थाल्नुभयो। उहाँका श्रीमान पनि पशुसम्बन्धी डाक्टर हुनुहुन्थ्यो। अपाङ्गता भनेको भवितव्य हो, जो कसैलाई पनि यस्तो अवस्था पर्न सक्छ भनेर

उहाँले पूर्णीलाई सम्झाउने गर्नुभयो। झन् धेरै माया गर्न थाल्नुभयो।

अवस्था सहजै भए पनि पूर्णीलाई आफ्नै मन सम्हाल्न धौ-धौ थियो। अब के गर्ने भन्ने चिन्ताले सदा सताइरहन्थ्यो। उहाँको कुरा काट्नेहरू बढ्नथाले। उहाँ भन्नुहुन्छ– 'छरछिमेकीले यसको श्रीमानले अब अर्को विवाह गर्छ भनेको सुन्दा साच्चिकै हो कि जस्तै पनि लाग्थ्यो।'

**श्रीमान्को मृत्यु र छोरा-छोरी सानै भएकाले उहाँको जीवनमा आँधिबेहरी आउन थाल्यो। निराश भएर घरमै बस्न थाल्नुभयो। त्यसैबेला अपाङ्गता भएका व्यक्तिहरूको संस्थाको बारेमा गा.वि.स. पुगेर सोधखोज गर्नुभयो। नेत्रहीनहरूका लागि नेत्रहीन संघले दिएको मुडा बनाउने तालिम लिनुभयो।**

दुवै आँखाले देख्न छाडेपछि उहाँ गाँउमा हिडडुल गर्न छाड्नुभयो। कहीँ कतै जानुपर्दा सहयोगी चाहिने र घरमा साना-साना छोरा-छोरी भएकाले पनि खासै बाहिर जानुहुन्नथ्यो। त्यति भए पनि उहाँले श्रीमानको माया भने पाइनै रहनुभयो। विडम्बना नै भन्नुपर्छ अचानक उहाँका श्रीमानको मृत्यु भयो। त्यसपछि जसले जे भने पनि उहाँ चुपचाप नै रहनुहुन्थ्यो।

श्रीमान्को मृत्यु र छोरा-छोरी सानै भएकाले उहाँको जीवनमा आँधिबेहरी आउन थाल्यो। निराश भएर घरमै बस्न थाल्नुभयो। त्यसैबेला अपाङ्गता भएका व्यक्तिहरूको संस्थाको बारेमा गा.वि.स. पुगेर सोधखोज गर्नुभयो। नेत्रहीनहरूका लागि नेत्रहीन संघले दिएको मुडा बनाउने तालिम लिनुभयो। एक महिनाभन्दा बढी त्यसै संस्थामा बसेर उहाँले मुडा बनाउन सिक्नुभयो।

तालिम लिए पनि पूर्णीसँग लगानीको अभाव थियो। मुडा बनाएर बेच्ने काम गर्न नसकी घरमै बसिरहनु भएको थियो। त्यसैबखत उहाँ नेपाल अपाङ्ग महिला संघको सम्पर्कमा पुग्नुभयो। त्यस संस्थामा आवद्ध हुनुभयो। संस्थाको अगुवाइमा उहाँसँगै ६/७ जना अपाङ्गता भएका महिला रहेको स्वावलम्बन समूह निर्माण गरियो।

त्यस संस्थामा आवद्ध भएपछि उहाँले नेतृत्व विकास, प्रजनन स्वास्थ्य, समुदायमा आधारित पुनःस्थापना, कानुनी विषयसम्बन्धी तालिम लिने अवसर पाउनुभयो। तालिमपछि नेपाल अपाङ्ग महिला संघले अपाङ्गता भएका महिलाको आवश्यकता र समस्या पहिचान गरी बिउपुँजी रकम उपलब्ध गरायो। त्यसबाट पाएको केही रकम पूर्णी खवासले मुडा व्यवसायमा लगाउनुभयो। त्यसैलाई निरन्तरता दिंदै जाँदा अहिले उहाँ घरमै बसेर खर्च कटाएर मासिक ४ हजार रूपियाँसम्म आम्दानी गर्न सकिरहेको जानकारी उहाँ दिनुहुन्छ। उक्त रकम उहाँले नाती नातिनाको पढाईमा खर्च गर्ने र बाकी रहेको रकम बचत गर्ने गरेको बताउनु हुन्छ।

आफ्नो जीवनमा परिवर्तन आउनुमा नेपाल अपाङ्ग महिला संघको सहयोग महत्वपूर्ण रहेको उहाँले सुनाउनुहुन्छ। धेरै कुरा जान्न र बुझ्न पाएको बताउनुहुन्छ। उहाँ भन्नुहुन्छ– अब मुडा बनाउने र बेच्ने व्यवसायका बारेमा अरू अपाङ्गता भएका महिलालाई पनि सिकाउने लक्ष्य छ। ◆

# धन्न उपचार भयो

दिलमाया कार्की



दिलमाया कार्कीको जन्म २०३० साल पुस २९ गते संखुवासभा जिल्लाको सामान्य परिवारमा भएको हो। सानैमा आगोले पोलेर खुट्टाको भाग पेटमा जोडिएका कारण उहाँलाई हिंडडुल गर्न निकै गाह्रो हुन्थ्यो। भाइ–बहिनी पढ्न जाँदा उहाँ पनि पढ्ने इच्छा व्यक्त गर्नुहुन्थ्यो। उहाँको इच्छा पूरा गर्नु त कता हो कता परिवारका सदस्यले विभिन्न उपनाम दिनथाले।

'सहन नसकी दिनरात चिन्ताले रूने गर्थें', उहाँ भन्नुहुन्छ– 'अपाङ्गता हुनुमा मेरो के दोष थियो र त्यस्तो व्यवहार व्यहोर्नु परेको हो भनेर सोच्ने गर्थें। कसैसँग पनि बोल्न मन लाग्दैनथ्यो।

अपाङ्गता भएकाले परिवारले अरू छोरा–छोरीलाई भन्दा उहाँसँग फरक व्यवहार गर्न थाले। अरूलाई काख र उनलाई पाखा गराउन थाले। छिमेकीहरू पनि 'यस्ताले बाँचेर पो के गर्नु छ र भनेर कुरा काट्न थाले। अपाङ्गता भएकै कारण उहाँको विवाह हुँदैन भन्न पनि बाँकी राखेनन्। उहाँ सधैं साथीहरू सँगबाट पनि एक्लिने गर्नुहुन्थ्यो।

शारीरिक अवस्था त्यस्तै भए पनि उहाँ

> दलमाया ग्राहकले भने अनुसारका बुनाइ र कडाइका काम गर्नसक्ने हुनुभएको छ। आवश्यक घरखर्च आफै जुटाउन सफल हुनुभएको छ। मासिक खर्च कटाएर तीन हजार रुपियाँसम्म बचत गर्न थाल्नुभएको छ। उहाँ त भन्नुहुन्छ– परिवारलाई र भाइ–बहिनीलाई पढाइमा समेत सहयोग गर्ने गरिरहेकी छु।

अर्काको मेलापातमा काम गर्न जानुहुन्थ्यो। संयोगकै कुरा हो– एकदिन काठमाडौंबाट खगेन्द्र नवजीवन केन्द्रका श्याम पोखरेल घुम्दै उहाँको घरमा पुग्नुभएछ। उहाँले अप्रेशन गरे सफल हुने सल्लाह सुझाव दिए पनि दिलमायाको परिवारले भने खासै चासो देखाएन। त्यसपछि मेलापात गरेर जुटाएको पैसा लिएर घरबाट भागी उहाँले काठमाडौंमा उपचार गराउनुभयो। राम्रोसँग हिड्न सक्ने भएर घर फर्कनुभयो।

उहाँ २०६७ सालमा नेपाल अपाङ्ग महिला संघको सम्पर्कमा पुग्नुभयो। त्यसपछि भने उहाँको जीवनमा परिवर्तन आयो। उनले विस्तारै संस्थाका बारेमा बुझ्दै गएर समूहमा आबद्ध हुनुभयो। त्यसै समूहमार्फत मासिकरूपमा केही रकम बचत गर्न थाल्नुभयो। त्यसै संस्थाले उपलब्ध गराएको बिँउपुँजीको रकमबाट बुनाइ र कडाईको काम सिक्नुभयो।

दिलमाया ग्राहकले भने अनुसारका बुनाइ र कडाइका काम गर्नसक्ने हुनुभएको छ। आवश्यक घरखर्च आफै जुटाउन सफल हुनुभएको छ। मासिक खर्च कटाएर तीन हजार रुपियाँसम्म बचत गर्न थाल्नुभएको छ। उहाँ त भन्नुहुन्छ– परिवारलाई र भाइ–बहिनीलाई पढाइमा समेत सहयोग गर्ने गरिरहेकी छु।

नेपाल अपाङ्ग महिला संघको साथ र सहयोगले नै आफूलाई साहसी बनाएको उहाँले सुनाउनु भयो। उहाँको निष्कर्ष छ– काम गर्नलाई स्रोत र साधनभन्दा पनि लगनशीलताको खाँचो पर्दो रहेछ। त्यसका साथै केही गर्छु भन्ने दृढ अठोट लिएमा गन्तव्यमा पुग्नसकिने सल्लाह र सुझाव अपाङ्गता भएका दिदी–बहिनीहरूलाई दिन चाहन्छु। ◆



# उदाहरणीय बनेर बाँच्ने सल्लाह

लहेरी चौधरी



आमालाई आफ्ना सन्तान जति प्यारो केही पनि हुँदैन। सन्तान सक्षम एवं योग्य भएको देख्न पाउनु भन्दा ठूलो सन्तोष संसारको कुनै पनि कुराले दिन सक्तैन। आमा बन्नु सजिलो हुँदैन। त्यसका लागि करिब करिब मृत्युको मुखमा पुग्नुपर्छ। तर पनि, सन्तान सुखको चाहनालाई त्यस्ता अप्ठ्याराले रोक्न सक्तैन।

सन्तान सुख पाउन सफल लहेरी चौधरी आम आमा भन्दा फरक हुने कुरै भएन। उहाँले पनि त्यो सुख पाउनु भयो। तर, सगरको र गर्भको वात कसले पो जान्दछ र ? उहाँका छोरा सनोजमा जन्मँदै बौद्धिक अपाङ्गता रह्यो। छोराको अपाङ्गताकै कारण घर-परिवार तथा छरछिमेकको समेत दुर्व्यवहार उहाँले व्यहोर्नु पर्‍यो। 'कुन

**केहीमात्रामा भए पनि आफूले कमाउन थालेपछि घर–परिवार र आफन्तको समेत सोच फेरिएको उहाँ जानकारी दिनुहुन्छ। आफ्नो क्षमता अनुसारको काम गरेर स्वावलम्बी हुन सबैलाई आग्रह गर्नुहुन्छ। स्थानीयस्तरमै बसेर जे सकिन्छ त्यही गर्ने प्रतिबद्धता उहाँको छ।**

जन्मको पापले यस्तो भएको' भन्ने जस्ता वचनवाण सुन्नुपरेको उहाँ सुनाउनुहुन्छ।

बयालिस वर्षे लहेरी तीन वटा छोरा, श्रीमान र श्रीमानकी अर्की श्रीमतीका रूपमा रहेकी आफ्नै बहिनीसँग मिलेर बस्दै आउनुभएको छ। आर्थिक अवस्था निकै कमजोर छ। परिवारले अर्काको खेतबारीमा काम गरेर जीविकोपार्जन गर्दै आउनु परिरहेको छ।

सनोजलाई सबैले छि छि र दुर दुर गर्थे। साथीहरूले खेल्न सहभागी नगराउने, असभ्य शव्दहरू प्रयोग गर्थे। खेलेको ठाँउबाट धकेल्ने गर्थे। यस्ता क्रियाकलापले लहेरीलाई निकै दुःख लाग्थ्यो। उनका श्रीमान भने वास्ता गर्दैनथे। यस्तो व्यवहारले आमा–छोरा दुवैलाई ज्यादै पीडा दिन्थ्यो।

जीवन भोगाईकै क्रममा एकदिन उहाँ नेपाल अपाङ्ग महिला संघको सम्पर्कमा पुग्नुभयो। संघले सञ्चालन गरेको स्वावलम्बन समूहमा सहभागी भएर वचत तथा ऋण कार्यक्रममा संलग्न हुन थाल्नुभयो। त्यससँगै संघले आयोजना गर्ने अपाङ्गतासम्बन्धी, नेतृत्व विकाससम्बन्धी, प्रजनन स्वास्थ्य अधिकारसम्बन्धी, कानुनी सचेतना जस्ता विषयका तालिममा समेत सहभागी हुने मौका पाउनुभयो।

आफ्नो छोरो अपाङ्ता भएको भए पनि लहेरीलाई अपाङ्गता र यसको हक–अधिकारसम्बन्धमा केही थाहा थिएन। त्यस किसिमका तालिममा सहभागी भएर अहिले उहाँ आफ्ना छरछिमेक र घर–परिवारलाई राम्रोसँग बुझाउन सक्ने हुनुभएको छ।

नेपाल अपाङ्ग महिला संघले पशुपालन गर्न २५ सय रुपियाँ उपलब्ध गरायो। त्यसबाट उहाँले दुई वटा सुँगुर किनेर पाल्न शुरू गर्नुभयो। छ महिनामा उहाँले १२ वटा सुँगुरका पाठा बेचेर करिब ४० हजार रूपियाँ घरेलु सहकारीमा बचत गर्नुभयो। अहिले पनि त्यसकै आम्दानीबाट समूहमा मासिकरूपमा बचत गर्दै आउनु भएको छ। केही रकम भने आफ्नै छोराको नाममा संकलन गरिदिनुभएको छ।

केहीमात्रामा भए पनि आफूले कमाउन थालेपछि घर–परिवार र आफन्तको समेत सोच फेरिएको उहाँ जानकारी दिनुहुन्छ। आफ्नो क्षमता अनुसारको काम गरेर स्वावलम्बी हुन सबैलाई आग्रह गर्नुहुन्छ। स्थानीयस्तरमै बसेर जे सकिन्छ त्यही गर्ने प्रतिबद्धता उहाँको छ।

लहेरी भन्नुहुन्छ– स्वावलम्बी हुनसके समाज र घरपरिवारका नीच व्यवहार सहेर बस्नु पर्दैन। समाजमा उदाहरणीय बनेर बाँच्नुपर्छ भन्ने धारणा बनाउनुभएकी उहाँको सन्देश छ– 'आफूले आँट गरे सहयोगी हातहरू अवश्य भेटिन्छन् र अगाडि बढ्नका लागि बाटो खुल्छ। ◆

# हेराइमा आयो परिवर्तन

सावित्रा बुढाथोकी



सावित्रा बुढाथोकीको जन्म २०४२ साल जेठमा खोटाङ्ग जिल्लामा भएको हो। जन्मँदै उहाँ दुवै हात र खुट्टाका धेरैजसो औँला थिएनन्। ठूलो हुँदै गएपछि परिवारले उहाँलाई बोझका रूपमा लिन थाले। विद्यालय जाने उमेर भइसक्दा पनि अपाङ्गता भएकै कारण किन पढ्नु पऱ्यो भन्न थालियो। भाइ-बहिनीसँगै विद्यालय जाँन्थे। उनीहरूसँगै विद्य ालय जान्छु भन्दा उहाँलाई रोकिन्थ्यो। उहाँको अपाङ्गताको कारण हिड्न सक्दिन र भाइ वहिनीलाई ढिला हुन्छ भनेर विद्यालय जानबाट उहाँलाई रोकिएको हो।

भाइ बहिनीसँगै खेल्न जाँदा उनीहरूका साथीले अपाङ्गतालाई जोडेर उपनाम दिएर बोलाउने गर्थे। त्यो कलिलो मष्तिस्कमा नराम्रो छाप परेको थियो। स्कुलमा साथीहरूले पनि एक्लो गराउने, शिक्षकहरूले पनि खासै वास्ता नगर्ने, बाटामा

**उमेर बढ्दै जाँदा उहँले झन् एक्लो महशुस गर्न थाल्नुभयो। साथीहरूबाट एक्लो र हरेक क्रियाकलापमा वञ्चित हुनुहुन्थ्यो। साथीहरूले कुरा गरिरहेको ठाउँमा उहाँ पुग्दा कुरा गर्नै बन्द गरेर बस्नेगर्थे। सबै 'विचरा' को पात्र बनाएर हेर्ने गर्थे। यति हुँदाहुँदै पनि सावित्राले पढाइ भने छाड्नु भएन।**

हिड्दा छरछिमेकी साइत बिग्रियो भनेर कानेखुसी गर्ने गर्थे। उहाँले सुनाउनुभयो– 'साथीहरू त झन् रोग सर्ला जस्तै गरेर टाढा बस्थे।'

उमेर बढ्दै जाँदा उहँले झन् एक्लो महशुस गर्न थाल्नुभयो। साथीहरूबाट एक्लो र हरेक क्रियाकलापमा वञ्चित हुनुहुन्थ्यो। साथीहरूले कुरा गरिरहेको ठाउँमा उहाँ पुग्दा कुरा गर्नै बन्द गरेर बस्नेगर्थे। सबै 'विचरा' को पात्र बनाएर हेर्ने गर्थे। यति हुँदाहुँदै पनि सावित्राले पढाइ भने छाड्नु भएन।

गाउँबाटै प्रवेशिका (एसएलसी) परीक्षा दिएर उहाँ मोरङ्गको सुन्दरपुरमा रहेको मामाघर पुग्नुभयो। त्यहाँ उहाँको भेट नेपाल अपाङ्ग महिला संघका भीमा खतिवडा सँग भयो। त्यसपछि उहाँ संघसँग जोडिनुभयो। त्यही संस्थाले गठन गरेको दुलारी अपाङ्ग महिला समूहमा आवद्ध हुनुभयो। उहाँ सुनाउनुहुन्छ– संघका गतिविधिमा लाग्दा आफूजस्तै धेरै अपाङ्गता भएका व्यक्तिहरूसँग भेटभयो। आफूमात्र अपाङ्गता भएको होइन रहेंछु भन्ने अनुभव गर्नथालें।

उहाँ प्रवेशिका परीक्षामा पनि सफल हुनुभयो। सुन्दरपुरकै एउटा बोर्डिङ स्कुलमा काम गर्न थाल्नुभयो। आफूलाई आवश्यक खर्च आफैं कमाउन थाल्नुभयो। त्यतिबेला अवस्था उहाँले यसरी सुनाउनुभयो– आत्मनिर्भर बनेपछि घर–परिवार र समाजको आफूप्रतिको दृष्टिकोणमा पनि परिवर्तन हुनथाल्यो।

पछि खोटाङमै सरकारी स्कुलमा निजी श्रोतबाट तलब पाउनेगरी काम गर्न थाल्नुभयो। त्यसपछि त अफ्नो आत्मविश्वास झन् बढेको उहाँ बताउनुहुन्छ। उहाँले नेपाल अपाङ्ग महिला संघले आयोजना गरेका नेतृत्व विकास, प्रजनन स्वास्थ्य अधिकार, कानुनी सचेतना, कम्प्युटर, बुटिक आदि तालिममा सहभागी हुनुभयो। फुर्सदको समयमा तालिममा सिकेका काम गर्ने गरेको उहाँ बताउनुहुन्छ।

अपाङ्गता भए पनि अवसर पाएमा आत्मविश्वासका साथ काम गर्न सकिन्छ भन्ने उहाँलाई लागेको छ। अपाङ्गतालाई जोडेर जसले जेसुकै उपनाम दिए पनि पचाउन सक्नुपर्छ भन्ने उहाँलाई लागेको छ। उहाँको सन्देश छ–क्षमता भए सफलता प्राप्त गर्न सबैको साथ र सहयोग जुट्छ। आफूजस्तै अपाङ्गता भएर घरभित्र बसेका दिदी– बहिनीलाई उहाँको आग्रह छ– आफ्ना आवाज लिएर बाहिर निस्कनुस्। ◆

# पौरखीलाई चाहिंदैन ठूलो सहयोग

शान्ता श्रेष्ठ



मानिसले समुद्र कसरी तरे होलान् ? अनकन्टार जंगल कसरी पार गरे होलान् ? विश्वकै सबैभन्दा अग्लो हिउँ नै हिउँले पुरिएको सगरमाथाको टुप्पोमा पुग्न सके होलान् ? यी यस्ता प्रश्नको उत्तर खोज्दै जाँदा भेटिने कुरा हो- साहस र लगनशीलता।

आँखाले पनि सितिमिति देख्न नसकिने धमिराले अजङ्का माटोको ढिस्को उठाएको हुन्छ। सामान्य आर्थिक अवस्थाको विद्यार्थी रहेका बिल गेट्स यतिबेला विश्वकै सबैभन्दा धनी मानिस भएका छन्। यी उदाहरणले सफलताका लागि ठूलै कुरा वा स्रोत-साधन नभए पनि हुन्छ भन्ने देखाउँछन्।

मेहनत, निरन्तरताका साथै आँटकै कारण सानो सहयोग पाएर पनि अघि बढ्न सकिने, सफल हुन सकिने उदाहरण २० वर्षे शान्ता श्रेष्ठको जीवन पनि हो। जन्मँदै उहाँका बहु-अपाङ्गता रह्यो। उहाँको आवाज नआउने, हात र खुट्टामा समेत समस्या रहेको छ।

सन्तान सुख पाउने आशमा रहनुभएकी शान्ताकी आमाले उहाँको जन्मपछि अनेक किसिमका पीडा सहन वाध्य हुनुपऱ्यो। छोरीमा रहेको अपाङ्गता भएकै

कारण उहाँले लोग्नेको कुटपिट सहनुपर्‍यो। अनेक लाञ्छना उहाँ उपर लगाइए।

शान्ताको शारीरिक अवस्था त्यस्तो हुनुमा कसैको दोष छैन। यो त प्रकृतिको कुरा हो। त्यसका लागि यदि उहाँकी आमालाई दोष दिने नै हो भने त्यसैका लागि उहाँका बाबुलाई पनि उत्तिकै दोष दिनुपर्ने हुन्छ। तर, शान्ताकी आमालाई मात्र त्यसको दोषी ठहर्‍याइयो। उहाँले लोग्नेबाट छुट्टिनु पर्‍यो। अर्की श्रीमती लिएर उहाँका लोग्ने झापा जिल्लामै अलग्गै बस्न थाले।

शान्ता आमाका व्यथा यसरी सुनाउनुहुन्छ– लोग्ने नै आफ्नो नहुँदा अरू कसले पो राम्रो गर्छ भन्ने ठान्नु र ! मेरी आमालाई घरका अरूले पनि नहेर्ने गर्न थाले। उहाँलाई घरबाट निस्केर जा भनियो। घरमा बस्न नदिएपछि उहाँ मलाई लिएर मोरङ जिल्लाको सुन्दरपुरमा रहेका माइतीको शरणमा पुग्नुभयो। त्यहाँ सानो छुट्टै झुपडी बनाएर बस्न दिइयो।

शान्ता भन्नुहुन्छ– मैले पढ्ने मन गरेकीले आमाले नजिकैको विद्यालयमा भर्ना गरिदिनुभयो। बिहान बेलुकाको छाक टार्न गिट्टी कुट्ने काम गर्नुभयो। ठूली हुँदै गएपछि मलाई एक्लो महशुस हुन्थ्यो। साथीहरूको भीडमा पनि म एक्लै हुँदै गएँ। साथीहरू छेउछाउमा समेत पर्दैनथे। मेरो अपाङ्गता भएकै कारण आमालाई समेत समाजले अलग गराउन थाले। कसैले पनि वास्ता नगर्ने, सबैले यस्ताको सन्तान भनेर कुरा काट्ने गर्थे।

विद्यालयले पनि सहयोग नगर्ने र आफ्नो आर्थिक अवस्थाका कारण आमाले पढाउन नसक्ने भएपछि शान्तासँग अर्को उपाय थिएन। उहाँले पढाइ छाड्नुपर्ने अवस्था आइसकेको थियो। त्यसै बेला नेपाल अपाङ्ग महिला संघका सदस्यसँग भेट भयो। ती सदस्यले शान्ताका बारेमा आफ्नो संघमा जानकारी गराउनुभयो।

नेपाल अपाङ्ग महिला संघले शान्ताको विद्यालयका प्रधानाध्यापक (हेडसर) सँग कुरा गर्‍यो। समावेशी शिक्षाका बारेमा जानकारी गरायो। शान्ता भन्नुहुन्छ– त्यसपछि मैले विद्यालयबाट सहयोग पाउन थालें। महिला संघले छात्रावृति समेत उपलब्ध गरायो। त्यसबाट कपी, कलम, ड्रेस लगायतका खर्च सजिलै पुग्यो र पढाईलाई निरन्तरता दिएँ।

गिट्टी कुटेरै भए पनि शान्ताकी आमाले छोरीका नाममा समूहमा मासिक रूपले बचत गर्न थाल्नुभयो। उहाँ २०६९ सालमा चेतना अपाङ्ग महिला समूहमा आवद्ध भएपछि संघकै पहलमा शान्ताले अपाङ्गता परिचयपत्र समेत पाउनुभयो। त्यसपछि मासिक रूपमा अपाङ्गता भत्ता समेत उपलब्ध भएको छ।

शान्ता र उहाँकी आमा अर्काको जग्गामा बस्दै आउनुभएको छ। बस्ने झुपडीमा पानि चुहेको थियो भने सामाजिक सुरक्षा भत्ता, गिट्टी कुटेर आएको रकमका साथै बाख्रा पालेर भएको आयबाट सानो बस्ने झुप्रो बनाउनुभएको छ।

यतिबेला शान्ता र उहाँकी आमाको जीवनमा परिवर्तन आएको छ। शान्ता भन्नुहुन्छ– छरछिमेक र आफन्तहरूको पनि व्यवहार सकरात्मक देखिन थालेको छ। उनीहरूले अहिले अपाङ्गता भएका व्यक्तिहरूलाई सम्मानपूर्ण व्यवहार गर्न थालेका छन्।

घर परिवार र समाजमा खुसी भएर जीवन यापन गर्न पाउँदा शान्ता र उहाँकी आमा खुसी व्यक्त गर्नुहुन्छ। अपाङ्गता हुने बित्तिकै केही गर्न सक्दैनन् भन्नेहरूका अगाडि नमूनाको रूपमा चिनिन सक्नुपर्ने र आफ्नो क्षमता अनुसारको सिप विकास गरेर स्थानीयस्तरमै बसेर भए पनि आफू जस्तै अपाङ्गता भएर घर भित्रै बसेकाहरूलाई बाहिर ल्याउन निरन्तर लागिरहने शान्ता बताउछिन्। ◆

# घरमै थन्किएर बस्नुहुँदैन

सपना खड्का



एकदिनको कुरा हो, राति सुतिरहेकै बेलामा एक्कासी सपना खड्काको शरीरको एकापट्टिको भाग चल्नै छोड्यो। त्यो घटनाले उहाँको परिवारलाई निकै तनाबमा पाऱ्यो। सामान्य परिवारमा चार सन्तानमध्येकी कान्छी छोरीका रूपमा हुर्केकी सपनाले जीवनमा ठूलै सपना देख्नुभएको थियो। पढाई पनि राम्रैसँग चलिरहेको थियो। उहाँ कक्षा ९ मा पढ्दै हुनुहुन्थ्यो।

उपचारका लागि सपनालाई विभिन्न ठाँउमा लगियो। भारतको खरैया भन्ने ठाँउमा लगेर उपचार गराउँदा केही सुधार आए पनि पहिलेको जस्तो सामान्य अवस्थामा भने भएन। मोरङ्कै उर्लाबारी भन्ने ठाँउमा थेरापी उपचार समेत गराइयो। त्यसबाट पनि केही सुधार आयो तर उहाँको एउटा हातले राम्रोसँग सामानहरू उचाल्न भने सक्दैन।

दैनिक जीवनयापनका क्रममा समस्याहरू बढ्दै गए। बेलाबेलामा जाँच गराउनु पर्दथ्यो।

**सपनाले पनि संघबाट विऊ पुँजी पाउनुभयो। त्यसबाट उहाँले बाख्राका साना पाठा किनेर पाल्न थाल्नुभयो। त्यसैबाट आएको रकम उपचारमा समेत खर्च गर्नुभयो। केही रकमले घर नजिकै विद्यालयको छेउमा घुम्ती पसल गर्नुभएको छ। त्यही पसलको नाफाबाट दैनिक ५० रूपियाँ बचत गर्न थाल्नुभएको छ।**

प्रत्येक तीनदेखि छ महिनामा दुई हजारदेखि २५ सयसम्म खर्च लाग्थ्यो। उपचारका क्रममा धामी झाक्रीलाई देखाउने समेतका बाकी रहेनन्।

एक्कासी विरामी परेपछि सपनाको दिनचर्यामा निकै परिवर्तन आयो। दैनिक क्रियाकलापदेखि लिएर साथीहरूसँग रमाउने र आफ्ना कुराहरू खुलेर अरू सामु राख्न गाह्रो मान्न थाल्नुभयो। अपाङ्गता भएर जीवन विताइरहँदा साथीहरूले गर्ने व्यवहारमा समेत फरक पाउन थाल्नुभयो सपनाले। रोग सर्छ कि भने जस्तो गरेर साथीहरू तर्कने गर्थे।

दिन बित्दै थिए। एक दिन उहाँकै छिमेकी साथी सावित्री बुढाथोकीसँग सपनाको भेट भयो। सावित्रीबाट उहाँले नेपाल अपाङ्ग महिला संघको बारे थाहा पाउनुभयो। सपनाले अपाङ्ग महिला संघको पहलमा गठन भएको स्वावलम्बन समूहमा आवद्ध हुने मौका पनि पाउनुभयो। मासिक रूपमा बचत समेत गर्न थाल्नुभयो।

नेपाल अपाङ्ग महिला संघले अपाङ्गता भएका महिलाको आया आर्जनका लागि सहयोग गर्दै आएको थियो। अपाङ्गता भएका महिलालाई स्वावलम्बी बनाउन आय आर्जनका लागि बिऊ पुँजी उपलब्ध गराउँथ्यो। सपनाले पनि त्यसरी पाइने विऊ पुँजीबाट बाख्रा पाल्ने सोच बनाएर त्यसका लागि पहल गर्नुभयो।

सपनाले पनि संघबाट विऊ पुँजी पाउनुभयो। त्यसबाट उहाँले बाख्राका साना पाठा किनेर पाल्न थाल्नुभयो। त्यसैबाट आएको रकम उपचारमा समेत खर्च गर्नुभयो। केही रकमले घर नजिकै विद्यालयको छेउमा घुम्ती पसल गर्नुभएको छ। त्यही पसलको नाफाबाट दैनिक ५० रूपियाँ बचत गर्न थाल्नुभएको छ।

सपनालाई यतिबेला सामान्य जीवन चलाउन अरूसँग हात थाप्नु परेको छैन। उहाँ भन्नुहुन्छ– काम गर्ने इच्छा र जाँगर भएमा अरूको सानै सहयोगबाट पनि अगाडि बढ्न सकिन्छ। त्यसका लागि आफू इमान्दार हुनु चाहिँ जरूरी छ। अपाङ्गता भएकै भए पनि कसैले पनि घरमा थन्किएर बस्नुहुँदैन भन्ने उहाँको धारणा छ। ◆

# बोझ ठानिएका नै बने सहयोगी

उर्मिला भट्टराई



उर्मीला भट्टराई अपाङ्ता भएका महिलाहरूको समूहको संयोजक भएर काम गरिरहनु भएको छ। उहाँलाई सानो उमेरमा देख्नेहरू आश्चर्यमा पर्ने गरेका छन्। उनीहरूमध्ये धेरै "त्यस्ती केटी यस्ती भई ? पत्याउँनै गाह्रो" भनेर जिब्रोटोक्ने गर्छन्।

तेह्रथुम जिल्लाको फाक्चामारा गा.वि.स. मा २०४२ सालमा उहाँको जन्म भएको हो। आमा–बुबाका आठ सन्तानमध्ये उनी साइली छोरी हुनुहुन्छ। जन्मँदै उहाँमा शारीरिक अपाङ्गता रह्यो। नौ वर्षको उमेरमा मात्रै विस्तारै हिड्न थाल्नुभयो। उहाँको एउटा खुट्टा र दाहिने आँखामा समस्या छ।

अपाङ्गताकै कारण सानो छँदा उर्मिलाले विद्यालय जान पाउनु भएन। नौ वर्षको उमेरमा विद्यालय जान खोज्दा पनि घर–परिवारबाट "सकी–नसकी किन जानु, घरमै बसे हुने नि" भनियो। विद्यालय जान पनि करिब एक घण्टाको उकालो र ओरालो हिड्नु पर्थ्यो। तैपनि उहाँको विद्यालय जाने रहर न्यतिकै मर्न पाएन। लड्दै पड्दै असिन पसिन गरेर विद्यालय पुग्ने गर्नुहुन्थ्यो।

उहाँ ती दिन यसरी सुनाउनुहुन्छ– विद्यालयमा शिक्षक र साथीहरूबाट पनि राम्रो व्यवहार पाउन सकिन। "यसले पढेर के गर्न सक्छे, पढाइमा

पहिले उहाँ अरूका सामु बोल्न सक्नुहुन्नथ्यो भने अब त्यो अवस्था छैन। अपाङ्गताको परिभाषा दिएर अपाङ्ता भएकाहरू प्रति घर-परिवारका साथै समाज र राज्यको समेत जिम्मेबारी के कस्ता हुन्छन् भन्नेबारेमा बताउन सक्ने हुनुभएको छ।




लगानी लगाउन आवश्यक छैन, किन खर्च गर्नपर्‍यो ?" भन्ने जस्ता वचन सुन्नुपर्‍यो। कोही कतै हिड्ने बेलामा भेट भयो भने "साइत बिग्रियो" भनेर कुरा काट्नसमेत पछि पर्दैनथे।

जसले जे भने पनि, सहयोग नगरे पनि उर्मिलाले विद्यालय जान भने छाड्नुभएन। तर विडम्बना, अक्षर चिन्ने भएपछि "अब पढ्नु पर्दैन" भनेर रोक्न खोजियो। साथीहरूले सँगै हिड्दा पनि घचेडेर लडाउने गर्थे भने घर परिवारका सदस्यले पारिवारिक जमघटमा समेत सामेल गराउँदैनथे। कसैको विवाह, व्रतबन्ध, भोज-भतेर आदिमा लग्दैनथे।

नेपाल अपांग महिला संघले २०६६ सालमा घर घरमा पुगेर अपाङ्ता भएका महिलाको तथ्याङ्क संकलन गर्दै थियो। उहाँ भन्नुहुन्छ- त्यसैका लागि घरमा आइपुगका मानिसबाट अपाङ्गता भएका व्यक्तिहरूका लागि पनि काम गर्ने संघका बारेमा थाहा भयो। अपाङ्गता भएका महिलाका लागि काम गर्ने संस्था पनि रहेको समेत थाहा पाएँ।

त्यसकै केही समयपछि नेपाल अपाङ्ग महिला संघले उहाँको गाउँमा पनि स्वावलम्बन समूह गठन गर्न लागेको थियो। उहाँले पनि त्यहाँ गठन भएको दुलारी अपाङ्ग महिला समूहमा आवद्ध हुने मौका पाउनुभयो। समूहमा मासिक रूपमा बचत समेत गर्न थाल्नुभयो।

अपाङ्गता भएका महिलाहरूको जीवन यापन सहज बनाउने उद्देश्यले समूह गठन गरिएको थियो। त्यसका लागि नेपाल अपाङ्ग महिला संघले आय-आर्जनका लागि विभिन्न तालिमसँगै बीउपुँजी पनि उपलब्ध गरायो। उर्मिलाले पनि नेतृत्व विकास, कानुनी सचेतना, प्रजनन स्वास्थ्य अधिकार, अपाङ्गता र मानव अधिकार, सी.वी.आर जस्ता तालिम लिने मौका पाउनुभयो। बीउ पुँजीबाट बाख्रा पाल्नुभयो।

संस्था र समूहमा आवद्ध भएपछि उहाँका जीवनमा केही राम्रा दिन आउनथाले। परिवारले समेत सकारात्मक सोच्न राख्न थालेको उहाँ बताउनुहुन्छ। घरकै ले हेला गर्ने, उहाँले पालेको बाख्रालाई घाँससम्म नहाली दिने गरेको अवस्था पनि सम्फनुहुन्छ। उहाँ भन्नुहुन्छ- आज त्यस्तो अवस्था छैन। आफ्नो सामान्य खर्चका लागि अरूसँग हात थाप्नुपरेको छैन बरू आफैंले परिवारलाई सहयोग गर्न थालेकी छु।

पहिले उहाँ अरूका सामु बोल्न सक्नुहुन्नथ्यो भने अब त्यो अवस्था छैन। अपाङ्गताको परिभाषा दिएर अपाङ्ता भएकाहरू प्रति घर-परिवारका साथै समाज र राज्यको समेत जिम्मेबारी के कस्ता हुन्छन् भन्नेबारेमा बताउन सक्ने हुनुभएको छ। उहाँको निष्कर्ष छ- नेपाल अपाङ्ग महिला संघले नै आफ्नो जीवनमा परिवर्तन गरायो। ◆

